| | | |
|---|---|---|
| नाटक | : | स्मृति |
| नाटककार | : | प्रवीण पुमा |
| सल्लाहकार | : | प्रा. डा. खगेन्द्रप्रसाद लुइटेल |
| सम्पादक | : | परशुराम राई |
| शुद्धाशुद्धि | : | लीला लुइटेल |
| | : | डा. धनप्रसाद सुबेदी |
| टङ्कन | : | सजना चाम्लिङ |
| फन्ट | : | सगरमाथा |
| ले-आउट | : | प्रवीण पुमा |
| आवरण कल्पना | : | लक्ष्मी राई र प्रवीण पुमा |
| आवरण सज्जा | : | सुमित कार्की र प्रवीण पुमा |
| प्रकाशक | : | सुम्निमा थिएटर एकेडेमी<br>ललितपुर-१४, जुपिटर टोल, नेपाल । |
| | : | ९८४१२४५५४८/९८४१३७४३५६ |
| | : | sumnimatheatre@gmail.com |
| सर्वाधिकार | : | नाटककारमा |
| प्रथम संस्करण | : | ५०८३ य./२०८० वि./२०२३ इ. |
| पेपर मूल्य | : | रु.३६०।- (विदेशमा US $ : 3.50) |
| इ-पेपर मूल्य | : | रु.१५०।- (विदेशमा US $ : 1.50) |

TU CENTRAL LIBRARY OF NEPAL CATALOGUING IN- PUBLICATION DATA

पुमा, प्रवीण

स्मृति (नाट्यकृति)/प्रवीण पुमा.–ललितपुर : सुम्निमा थिएटर एकेडेमी, २०८० वि.

८० पृ., सचित्र

ISBN :978-9937-1- 4736-1

१. नेपाली नाटक I. आख्या

N891.4952

Pu779s— dc 23 20231013011



# समर्पण

स्मृति
जस्ता
धेरै पात्रहरूलाई ।

## प्रकाशकीय

सुम्निमा थिएटर एकेडेमीको स्थापना २०४९ सालमा चिसाापानी-७, खोटाङ नेपालमा भएको हो । यस एकेडेमीलाई २०६६ सालमा ललितपुर जिल्ला प्रशासन कार्यालयमा पनि दर्ता गरियो । यसको दर्ता नं ३०३०/३१९ हो भने समाज कल्यान परिषद्को दर्ता नं २९२८६ हो ।

यस एकेडेमीले स्थापनादेखि अहिलेसम्म सुम्निमा-पारुहाङ (२०४९/२०७१), सुम्निमा (२०५०/२०७१/राष्ट्रिय नाट्य महोत्सव-२०७२), होङछ्वा (२०५०/बहुभाषिक नाट्य महोत्सव-२०७९, नेपाल सङ्गीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठान, नेपाल सरकार), निनाम्मा (२०५१), साया (२०५२), हेत्छ्वाकुप्पा (२०५४/२०७२), रिव्रिहाङमा-साल्पाहाङ (२०५४), आस्था : मुन्दुमको (२०५४/२०६६), मेरीहाङमा (२०५६), इडिपस रेक्स (२०५८), एउटा घरको कथा होइन(पूर्वाञ्चल नाट्य प्रतियोगिता-२०५९, सांस्कृतिक संस्थान, नेपाल सरकार), सिमान्तकृत आवाजहरू (२०६२), यलम्बर (राष्ट्रिय नाट्य महोत्सव-२०६३, नेपाल प्रज्ञा-प्रतिष्ठान, नेपाल सरकार), दाम्ला (२०६५, एडभान्स स्कुल), नभनिएको कथा, नगाइएको गीत (२०७५, बेरीजोन थिएटर), स्मृति (२०७९, सिनास कलेज) आदि दर्जनौं नाटकहरू स्थानीय, क्षेत्रीय र राष्ट्रिय स्तरमा मञ्चन गरेको छ ।

यस एकेडेमीले सुम्निमा (नाटकसङ्ग्रह-२०५३), हेन्खामा-निनाम्मा (मिथकसङ्ग्रह- २०५३), सुम्निमा-पारुहाङ (नाटकसङ्ग्रह-२०६४), हेत्छ्वाकुप्पा (नाट्यकृति-२०६६), निनाम्मा (नाटकसङ्ग्रह-२०६७), साया (नाटकसङ्ग्रह-२०६९), होङछ्वा (नाटकसङ्ग्रह-२०७०) आदि पुस्तकहरू प्रकाशन गरिसकेको छ । तथापि यस सुम्निमा (नाट्यकृति-२०७९) लाई केही परिमार्जनसहित सम्पादन गरेर प्रकाशन गरिएको छ ।

अन्त्यमा, यस सुम्निमा नाट्यकृति प्रकाशनको लागि प्रत्यक्ष तथा अप्रत्यक्ष रूपमा सहयोग पुऱ्याइदिनुहुने तपाईं सम्पूर्ण महानुभावहरूप्रति हार्दिक कृतज्ञता व्यक्त गर्दछु ।

लक्ष्मीदेवी राई
उपाध्यक्ष, सुम्निमा थिएटर एकेडेमी, नेपाल

# स्मृति नाट्यकृति : नाट्यलेखनको विधि

-प्रवीण पुमा

## १. विषय प्रवेश

स्मृति नाट्यकृति बियोगान्त नाटक हो । यो नाट्यकृति २०६७-२०६९ सालसम्ममा लेखिएको हो । यस नाट्यकृतिमा २००४ मा वेलायत सरकारले ल्याएको आइ.एल्.ई. नीतिपछि ब्रिटिस गोर्खा परिवारमा आएको मनोबैज्ञानिक बिचलनको विषयवस्तुहरू समेटिएका छन् । यस नाट्यकृतिमा स्मृति, थुम्राहाङ, आमा, खलिहाङ, बोन्तावामा, चाम्लोङमा, बाहिङमा, याम्फुहाङ, याक्थुङबा, कोँइचमा, साम्पाहाङ, दुमीमा, केसाङ, हाङसयङ, सयङ र छिमेकीहरू प्रमुख पात्रहरू छन् । प्रवीण पुमाको लेखन तथा निर्देशनमा यस नाट्यकृतिको प्रर्दशन २०७४ साल मंसिर १८ गते नव प्रभात स्कुल, कुपनडोल ललितपुरको प्राङ्गणमा भयो । यस नाट्यकृतिमा लस्ता व्रजचार्य, अप्सरा थारू, बन्दना तिमल्सिना, क्षितिज सिलवाल, निकिता मगर, प्रिती शाक्य, रञ्जीत ठाकुर र रूवेन भण्डारीले अभिनय गरेका थिए ।

यस नाट्यकृतिलाई २०७९ साल असार ३१ गते विहान ९ बजे पनि सिनास कलेजको हल, कोटेश्वार, काठमाण्डौमा प्रर्दशन गरियो । यस नाट्यकृतिमा रविन दाहाल, सुरक्षा श्रेष्ठ, अमर मिझार, प्रतिक्षा लामा, बिनिता बस्नेत, ललिता पौडेल, संगीता श्रेष्ठ, मात्रिका सुनुवार, निशा पाख्रिन, सुरक्षा मल्ल, टिका मगर र निर्मल श्रेष्ठले अभिनय गरेका थिए । प्रवीण पुमाको लेखन तथा निर्देशन रहेको यस स्मृति नाट्यकृतिलाई सिनास क्याम्पस र सुम्निमा थिएटर एकेडेमीले संयुक्त आयोजना गरेको थियो । सोही स्मति नाट्यकृतिलाई नाट्यलेखन विधिअनुसार लेखिएको थियो ।

## २. नाट्यलेखन विधि

नाट्यलेखन विधि भनेको नाट्यलेखनको तौरतरिका हो । यसमा नाट्यलेखनको प्रारम्भदेखि अन्त्यसम्मका कार्यहरू गरिन्छ । सो विधिहरूका आधारमा नाट्यकृति लेखिन्छ । यस नाट्यलेखनको अवधिमा विभिन्न समस्याहरू आउँछन् । त्यसलाई चिरेर जानुपर्छ । त्यसको लागि नाट्य अठोट चाहिन्छ । नाट्य अठोट नै छैन भने नाट्यलेखन अधुरो हुन्छ (पुमा, २०७९ : ४) । यस नाट्यलेखनको विधिहरूमा विविधता पाइन्छ । तथापि विषय छनौट, संरचना निर्माण, लेखन, पुनर्लेखन, सम्पादन, प्रकाशन र समीक्षा आदि नाट्यलेखनको लागि प्रमुख विधि हुन् । सोही विधिहरूअनुसार यस स्मृति नाट्यकृति लेखिको हो ।

### २. १. विषय छनौट

विषय छनौट भनेको धेरै विषय मध्येबाट आवश्यक विषयको छनौट हो । दृढयइच्छा भएपछि नाट्यलेखनको विषय छनौट गरिन्छ । यसमा नाट्य विषयको खोजी गरिन्छ । उद्देश्य अनुसारको विषय पाएपछि त्यो विषयको अध्ययन गरिन्छ । त्यो विषयमा भएका तथ्यहरूको प्रमाणीकरण गरिन्छ । त्यो विषयभित्र सूक्ष्म अध्ययन गरिन्छ । शङ्का लागेको विषयमा थप अनुसन्धान गरिन्छ । त्यसको तथ्य जुटाइन्छ, त्यसलाई पुनः प्रमाणीकरण गरिन्छ । तथ्यको प्रमाणीकरण भएपछि नाट्यछनौट गरिन्छ (ऐे, २०७९ : ५)। सोही विधि अनुसार यस स्मृति नाट्यकृतिको बिषय छनौट गरियो । यस अवधिमा विभिन्न नाट्य विषयहरू मस्तिष्कमा आइरहे । तिनै विषयहरू मध्येबाट यस स्मृति नाट्यकृतिको विषयको छनौट गरियो । विषयको छनौटपछि यस स्मृति नाट्यकृतिको नाट्य संरचना निर्माण गरियो ।

### २. २. संरचना निर्माण

संरचना निर्माण भनेको स्वारूप बनौट हो । विषय छनौटगरेपछि संरचनाको निर्माण गरिन्छ । यसले लेखनलाई मार्ग निर्देशन गर्छ । नाट्यलेखनमा पनि नाट्य संरचना निर्माण गरिन्छ । यसमा नाट्यघटना खोजिन्छ । खोजिएका घटनाहरू मध्येबाट उपयुक्त नाट्यघटना चयन गरिन्छ । यो नाट्यघटनामा समान नाट्यदृष्यहरू हुनुपर्छ । असमान दृष्यहरूलाई चयन गरिँदैन । नाट्य संरचनाको निर्माणमा नाट्यलेखकले स्वविवेक प्रयोग गर्छ (ऐ, २०७९ : ६) । सोही विधि अनुसारको यस स्मृति नाट्यकृतिको नाट्यसंरचना निर्माण गरियो । यस नाट्यकृतिको नाट्यसंरचना चक्रीय प्रणालीमा रहेको छ । यस नाट्यकृतिको नाट्यसंरचना निर्माणपछि यस स्मृति नाट्यकृति लेखिएको हो ।

### २. ३. लेखन

लेखन भनेको लिखित अभिलेखीकरण गर्नु हो । संरचना निर्माणगरेपछि लेखन कार्य गरिन्छ । नाट्य लेखनका लागि नाट्यघटना तयार पारिन्छ । त्यो नाट्यघटनाको गहिराइमा डुबेर अध्ययन गरिन्छ । सम्वन्धित नाट्यघटनालाई मस्तिष्कमा राखेपछि नाट्यभावमा डुबेर नाट्यलेखन गरिन्छ । नाट्यलेखनका अवधिमा घटनाअनुसार नाटककारको भाव अभिव्यक्तिमा परिवर्तन आउँछ । नाट्य पात्रहरूको चरित्र अनुसार नाटककारमा बिभिन्न भावहरू भङ्गीपन आउँछन् । यस लेखनअवधिमा नाटककार कहिले रून्छ । कहिले हाँस्छ । चिच्याउँछ । कहिले उफ्रिन्छ । यसले नाट्यलेखनलाई आकर्षक बनाउँछ (ऐ, २०७९ : ७) । यस नाट्यलेखन अवधिमा धेरै नाट्यलेखन गरियो । कैयौँपल्ट लेखन नै रोकियो । तैपनि नाट्यलेखनलाई निरन्तरता दिइयो । लेखिएका मध्ये आवश्यक नाट्यांश मात्रै राखियो । राखिएको नाट्यांशलाई पनि प्रमाणीकरण गरियो । प्रमाणीकरण गरेपछि मात्रै यस स्मृति

नाट्यकृतिले पूर्णता पाएको हो । यसरी नाट्यलेखनपछि यस नाट्यकृतिको नाट्य पुनर्लेखन गरियो ।

### २. ४. पुनर्लेखन

पुनर्लेखन भनेको पुन लिखित अभिलेखीकरण गर्नु हो । लेखनपछि पुनर्लेखन गरिन्छ । यसमा आवश्यकता अनुसार नाटकलाई संशोधन गरिन्छ । परिमार्जन गरिन्छ । सम्वन्धित नाट्य घटनाको चित्रण गरिन्छ । यसमा नाटकलाई प्रष्टता दिइन्छ । नाट्य दुविधालाई हटाइन्छ (ऐ, २०७९ : ८) । यसले नाट्य प्रस्तुतिलाई आकर्षक बनाउँछ । सोही विधि अनुसार यस स्मृति नाट्यकृतिलाई पुनर्लेखन गरियो । यस नाट्यकृतिको दृष्यहरू, संवाद, भेषभुषा, गहना, सामग्री, ध्वानी र दृष्याङकन जस्ता नाट्य तत्वहरूलाई थपियो । पुनर्लेखनपछि यस नाट्यकृतिलाई सम्पादन गरियो ।

### २. ५. सम्पादन :

सम्पादन भनेको काँटछाँट कार्य हो । पुनर्लेखनपछि सम्पादन गरिन्छ । यसलाई सम्पादकले सम्पादन गर्छ । नाट्य सम्पादनमा गुणस्तरलाई ध्यान दिइन्छ । आवश्यक नाट्य दृष्यहरू थपघट गरिन्छ । नपुगेको नाट्य गुणलाई थपिन्छ । धेरै भएको नाट्य गुणलाई हटाइन्छ । यसमा दर्शकको मनोभावलाई पनि समावेश गरिन्छ (ऐ, २०७९ : ९) । सोही विधि अनुसार यस स्मृति नाट्यकृतिलाई सम्पादन गरियो । यस नाट्यकृतिको सम्पादन अवधिमा धेरै नाट्यांशहरूलाई काँटछाट गरियो । नाट्य सम्पादन अवधिमा कैयौं पल्ट त नाट्यांश कि धेरै भएको थियो कि थोरै । काट्ने र जोड्ने काम कहिलै सकिएन । यसले समय पनि धेरै नै लियो । तर सम्पादन गरिएपछि यस स्मृति नाट्यकृतिलाई प्रकाशन गरियो ।

### २.६. प्रकाशन

प्रकाशन भनेको सार्वजनिकरण हो । नाट्य सम्पादनपछि प्रकाशन गरिन्छ । यसको लागि नाटकलाई प्राविधिकरण गरिन्छ । डिजिटलकरण पनि गरिन्छ । सेटिङ गरिन्छ । यसलाई प्रकाशनयोग्य बनाइन्छ (ऐ, २०७९ : १०) । सोही विधि अनुसारको यस स्मृति नाट्यकृतिको प्रकाशन गरियो । यस नाट्यकृति वि.सं. २०६७-२०६९ सालमा लेखिए पनि २०७५ सालमा हिमाली गुराँस पुस्तकमा प्रथम पल्ट प्रकाशन भयो (पुमा, २०७५ : १२६-१५१) । तथापि यस नाट्यकृतिको प्रथम संस्करण वि.सं. २०८० सालमा प्रकाशन गरियो । यस नाट्यकृतिलाई प्रकाशन पूर्व धेरै पटकपटक हेरियो । यसमा भएका त्रुटीहरूलाई न्यूनीकरण गरियो । यस स्मृति नाट्यकृतिको प्रकाशनपछि समिक्षा गरियो ।

### २. ७. समीक्षा

समीक्षा भनेको मूल्याङ्कन हो । प्रकाशनपछि समीक्षा गरिन्छ । यसमा नाटकको राम्रो र नराम्रो दुवै पक्षलाई केलाइन्छ । राम्रो पक्षलाई निरन्तरता दिइन्छ । कमीकमजोरीहरूलाई सुधारिन्छ । सुधारिएको नाटकलाई पुनः प्रकाशन गरिन्छ । यसमा पाठकको विचारलाई पनि समावेश गरिन्छ । सम्भव भएसम्म यसमा पाठकलाई पनि सहभागी गराइन्छ । यसमा पाठक  नै निर्णयक मानिन्छ । पाठक बिना नाट्यसमिक्षा पनि अधुरो मानिन्छ (ऐ, २०७९ : ११) । सोही विधि अनुसार यस स्मृति नाट्यकृतिको समीक्षा गरियो । त्यो समीक्षाबाट प्राप्त विचारहरूलाई यस नाट्यकृतिमा समेटियो । यस नाट्य समीक्षाबाट प्राप्त विचारहरूलाई आवश्यकताका आधारमा अगामी संस्करणमा समावेश गरिनेछ ।

### ३. टुङ्ग्याउनी

स्मृति नाट्यकृति बियोगान्त नाटक हो । यस नाट्यकृतिलाई नाट्य लेखन विधि अनुसार लेखिएको हो । नाट्यलेखन विधि भनेको नाट्य लेखनको सिलसिलाबद्ध तौरतरिका हो । यसमा नाट्य प्रारम्भदेखि अन्त्यसम्मका सम्पूर्ण कार्यहरू हुन्छन् । नाट्यलेखनका विधिहरू धेरै छन् । तथापि विषय छनौट, संरचना निर्माण, लेखन, पुनर्लेखन, सम्पादन, प्रकाशन र समीक्षा आदि प्रमुख नाट्यविधिहरू मानिन्छन् । सोही विधिअनुसार यस स्मृति नाट्यकृतिलाई लेखियो । यस नाट्यकृतिमा २००४ मा वेलायत सरकारले ल्याएको आइ.एल्.ई. नीतिपछि ब्रिटिस गोर्खा परिवारमा आएको मनोबैज्ञानिक बिचलनको विषयवस्तुहरू समेटिएका छन् ।

वास्तवमा सन् २००४ मा वेलायत सरकारले आइ.एल्.ई. नीति ल्याएपछि अधिकांश ब्रिटिस गोर्खा परिवारहरू नेपालबाट वेलायत हुइँकिए तर उनीहरूसँगै उनीहरूका वर्षौंदेखिको भाषा, धर्म, संस्कार, संस्कृति, ज्ञान, सीप, अनुभव, विचार, शिक्षा आदि पनि वेलायत नै पलायन भयो । तैपनि वेलायतमा मिनी नेपाल बन्यो । तर यस नीतिपछि नेपाल र वेलायतमा रहेका नेपालीहरूका भौतिक सम्बन्धमा पहरा बन्यो । यसले कैयौँ भावनात्मक सम्बन्धमा बज्रपात पाऱ्यो । कैयौँको विश्वासको पुल नै भत्कियो । कैयौँको माया छुट्यो, कयौँको पिरती टुट्यो । कैयौँले आँसुमा डुबेर बाँच्नु पऱ्यो । कैयौँको सुन्दर संसारलाई हुरीले उडायो । अझै, कैयौँको विश्वासको बन्धन नै चुँडियो । यसले भावनामा गहिरो चोट लाग्यो । यो जीवनको लागि निकै खतरा हो । यसको क्षेतिपूर्ति भौतिक सम्पतिले पुरा गर्नु सकिन्दैन । यस चोटलाई भोग्नेले मात्रै महसुस गर्न सक्छ, देख्नेले होइन, देख्नेले त केवल पागल भएको देख्नेछ तर किन पागल भयो ? त्यसको उत्तर कहिलै खोज्दैनन् । र, खोज्ने चेष्टा पनि गर्दैनन् । बरु हावामा उडाछन् किन कि हावामा उडाएर बाँच्नेहरूमा

आत्मिय चेतना नै हुँदैन । र, अरूको भावनामा चोट पुराएको पनि थाहा पाउँदैनन् । यो निकै पीडादायी तितो सत्य हो । तिनै पीडादायिक विषयहरूलाई यस स्मृति नाट्यकृतिमा नेपाली चस्माले हेरिएको छ, आगामी लेखनमा वेलायती चस्माले पनि हेरिनेछ । यस नाट्यकृतिमा मनोवैज्ञानिकतालाई रगटाइएको छ, प्रेमलाई होइन । तर प्रेमको सहाराचाहिँ लिइएकै हो । अत, यस नाट्यकृतिमा कसैलाई चोचोमोचा गरिएको छैन र गर्ने ध्येय पनि छैन् । तर यस नाट्यकृतिमा आई.एल्.ई.पछि नेपाली समाजमा जे सुनेँ, जे देखेँ र जे भोगेँ, त्यै लेखेँ ।

यस नाट्यकृतिमा कथ्य भाषा प्रयोग गरिएको छ । त्यो कथ्य भाषा जनजातीय समाजबाट लिइएको हो । यस समाजमा लिङ्ग भेद हुँदैन । अत, यस नाट्यकृतिको पात्रहरूको संवादमा पनि लिङ्ग छुट्ट्याइएको छैन । लिङ्गभेद समान राख्नु नै यस नाट्यकृतिको प्रमुख विशेषता हो । यसले केन्द्रीकृत विचारलाई केही ठेसमेस पक्कै पनि बनाएकै छ तर यस नाट्यकृतिको मुख्य उद्देश्य विचारलाई बाहिर ल्याउनु मात्रै होइन, स्थानीयत्वलाई पनि केन्द्रीकृत गर्नु हो । स्थानीय भाषिक अवस्था पनि बुझ्नु हो । अत: व्याकरणगत रूपमा अनौठो लागे तापनि स्थानीय भाषिक रूपमा तिनीहरू शुद्ध नै मानिन्छन् ।

यस नाट्यकृतिमा विशिष्ठ विद्धवानहरू नेपाल संगीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठानका कुलपति सरूभक्त, नेपाल प्रज्ञा-प्रतिष्ठानका उप-कुलपति डा. विष्णुविभू घिमिरे, त्रिभुवन विश्वविद्यालयका प्रा. डा. खगेन्द्रप्रसाद लुईटेल, सिक्किम विश्वविद्यालयका प्रा. डा. कविता लामा, सुरक्षाविद् तथा दार्शनिक रक्ष राईज्यूहरूको समालोचना, वरिष्ठ साहित्यकार लीला लुइटेल र नेपाल प्रज्ञा-प्रतिष्ठानका सदस्य सचिव सह-प्रा. डा. धनप्रसाद सुवेदीज्यूहरूको भाषा शुद्धिकरणसहितको बौद्धिक योगदान रहेको छ ।

अन्त्यमा, यस नाट्यकृतिको प्रकाशनार्थमा प्रत्यक्ष तथा अप्रत्यक्ष सहयोग पुऱ्याउनु हुने सम्पूर्ण मानुभावहरूप्रति हार्दिक कृतज्ञ छु । र, यस नाट्यकृतिको पात्र स्मृतिप्रति आजीवन ऋणी छु, जसको प्रेरणाले नै यो स्मृति नाटक सृजना भएको हो ।

E-Mail - sumnimatheatre@gmail.com

**सन्दर्भ स्रोत**

पुमा, प्रवीण । २०७५ । स्मृति । काठमाण्डौ : हिमाली गुराँस । वर्ष : २२, अंक : ७५, (पेज : १२६-१५१) ।

------। २०७९ । नाट्य लेखनको आधारभूत विधि । काठमाण्डौः सुम्निमा थिएटर एकेडेमी नेपालद्वारा आयोजित नाट्य लेखनको आधारभूत विधिमा प्रस्तुत (कार्यपत्र), ६ गते, कात्तिक ।




कलाकारहरू : सुरक्षा श्रेष्ठ, अमर मिझार, प्रतिक्षा लामाको अभिनय मिति २०७९।०३।३१ गते हेर्दै प्रा. डा. षडानन्द पौडेल । लेखन/निर्देशन : प्रवीण पुमा ।

| | | |
|---|---|---|
| १. | नाटक | : स्मृति |
| २. | लेखन/निर्देशन | : प्रवीण पुमा |
| ३. | दृष्य निर्देशन | : रविन दाहाल |
| ४. | निर्माता | : निनाम्मा राई |
| ५. | कलाकारहरू | : रविन दाहाल, सुरक्षा श्रेष्ठ, अमर मिझार, प्रतिक्षा लामा, बिनिता बस्नेत, संगीता श्रेष्ठ, मात्रिका सुनुवार, निशा पाखिन, सुरक्षा मल्ल आदि । |
| ६. | आयोजक | : सिनास क्याम्पस, कोटेश्वार र सुम्निमा थियटर एकेडेमी नेपाल । |
| ७. | समय | : विहान ९ बजे । |
| ८. | मिति | : २०७९ असार ३१ गते । |

## पात्रहरू

| | | | |
|---|---|---|---|
| १. | स्मृति | : | थुम्राहाङको प्रेमिका (वर्ष, २६) |
| २. | थुम्राहाङ | : | स्मृतिको प्रेमी (वर्ष, ३१) |
| ३. | आमा | : | थुम्राहाङको आमा (वर्ष, ७४) |
| ४. | खलिहाङ | : | थुम्राहाङको दाजु (वर्ष, ३७) |
| ५. | बोन्तावामा | : | खलिहाङको श्रीमती (वर्ष, ३४) |
| ६. | चाम्लोङमा | : | थुम्राहाङलाई माया गर्ने (वर्ष, २८) |
| ७. | बाहिङमा | : | आमाको बैनीको छोरी (वर्ष, २५) |
| ८. | याम्फुहाङ | : | थुम्राहाङको साथी (वर्ष, २८) |
| ९. | याक्थुङबा | : | थुम्राहाङको साथी (वर्ष, ३०) |
| १०. | कौँइचमा | : | स्मृतिको साथी (वर्ष, २५) |
| ११. | साम्पाहाङ | : | स्मृतिको बाउ (वर्ष, ४८) |
| १२. | दुमीमा | : | स्मृतिको आमा (वर्ष, ४५) |
| १३. | केसाङ | : | स्मृतिको श्रीमान् (वर्ष, २८) |
| १४. | हाङसयङ | : | मुख्य पुजारी (वर्ष, ३५) |
| १५. | सयङ | : | माङसयङको सहयोगीहरू (वर्ष, २५) |
| १६. | छिमेकीहरू | : | गाउँलेहरू (वर्ष ५देखि ८० सम्म) |

## नाट्यसार :

स्मृति नाट्यकृति सामजिक नाटक हो । यस नाट्यकृतिमा स्मृति, थुम्राहाङ, आमा, खलिहाङ, बोन्तावामा, चाम्लोङमा, बाहिङमा, याम्फुहाङ, याक्थुङबा, कोँइचमा, साम्पाहाङ, दुमीमा, केसाङ, हाङसयङ, सयङ छिमेकीहरू प्रमुख पात्रहरू छन् । यस नाटकमा स्मृति र थुम्राहाङ प्रेमी-प्रेमिका हुन् । उनीहरूले माङ्खिममा सुटुक्कै विवाह गरे । विवाहपछि स्मृति वेलायत गइन्, थुम्राहाङ नेपालमा रह्यो । केही महिनासम्म स्मृतिले थुम्राहाङलाई खबर गरिन् तर पछि बेखबर भइन् । स्मृतिको मायामा थुम्राहाङ विक्षिप्त भयो । थुम्राहाङलाई विवाहका थुप्रै प्रस्तावहरू आए तर स्वीकारेन । स्मृतिकै मायामा अडिग भयो । पछि स्मृतिले सुटुक्कै नेपाल आएर केसाङसँग विवाह गरिन् । थुम्राहाङ हेरेको हेरेकै भयो । उसको पीडालाई कसैले बुझेन । यो नाटक सम-वियोगान्तमा समाप्त हुन्छ ।

# पहिलो दृश्य

स्थान : माङखिम
समय : बेलुका
पात्रहरू : स्मृति र थुम्राहाङ ।
घटना : स्मृति र थुम्राहाङको प्रेमोलाव हुन्छ ।

(चराचुरूङ्गीहरू चिरबिराइ रहन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको पृष्ठभूमिमा हरियो फाँट देखिन्छ । त्यो फाँटको बीचमा वाहिबुङ[1]को रुख छ । वाहिबुङको फेदमा माङ्खिम[2] छ । थुम्राहाङले स्मृतिलाई ढाडमा बोकी ल्याएर वाहिबुङको फेदमा राख्छ । थुम्राहाङले सेतो सर्ट, जिन्सको खराने पेन्ट र छालाको कालो जुत्ता लगाएको छ । स्मृतिले सेतो टिसर्ट, निलो जिन्स पेन्ट र कपडाको खराने जुत्ता लगाएकी छिन् । पछाडी ढारमा खैरो कपडाको सुर्के झोला भिरेकी छिन् ।)

स्मृति : (किस खाएर) पापा ।
थुम्राहाङ : हुँ ।
स्मृति : एउटा कुरा भनुँ ?
थुम्राहाङ : भन्नु न, के कुरा हो ?
स्मृति : मैले हेवान्ली पाथ[3]को केटासँग मात्रै विवाह गर्नु रे ।

१. मुन्दुमी रुख । प्रत्येक मुन्दुमी प्रदर्शनमा वाहिबुङको पातसहितको डाला चाहिन्छ ।
२. मुन्दुमी मन्दिर । यस मन्दिरको बनौट गोलाकारमा हुन्छ । यसको बिचमा वाहिबुङको रुख हुन्छ ।
३. हेवन्ली पाथ २०५० पछि नेपालबाट स्थापित धार्मिक दर्शन हो । यस पाथको मुख्य दर्शन प्रेमवाद हो । यसलाई हिज होलिनेस सुप्रिम मास्टर गड एञ्जलले प्रतिपादन गर्नू भएको हो ।

थुम्राहाङ : कस्ले भन्यो ?
स्मृति : ममीले ।
थुम्राहाङ : अरू के भन्नु भो ममीले ?
स्मृति : हेवन्ली पाथको केटासँग मात्रै मेरो विवाह गरिदिनु हुने रे । अरू केटासँग त नगरिदिनु हुने रे । मसँग विवाह गर्नुको लागि हेवन्ली पाथकै केटा हुनु पर्छ रे । अरू धर्मको केटालाई त नदिनु हुने रे । फेरि अरू धर्मले काटमार गर्छ, हत्याहिंसा गर्छ तर हेवन्ली पाथले काटमार गर्दैन, हत्याहिंसा पनि गर्दैन । मासुमंस खाँदैन, जाँडरक्सी पनि चलाउँदैन । पुजापाठमा पनि फलफूल मात्रै चलाउँछ । अब तपाईंले पनि केही सोच्नु पर्ला कि ?
थुम्राहाङ : के को बारेमा ?
स्मृति : हेवन्ली पाथको बारेमा ।
थुम्राहाङ : खै, विचार गर्नुपर्छ । आफू त सर्वहारा परियो । जहाँ पनि गइन्छ, जे पनि गरिन्छ, जे पनि खाइन्छ, अझै माछामासु बेगार त झन् भातै पो रुच्दैन । त्यसैले अरू ता कै सोचिँदैन । बरु तपाईंकै बारेमा सोचिन्छ । बस त्यति हो ।
स्मृति : किन सोच्नु भा'को त ?
थुम्राहाङ : माया लाग्छ र नि ।
स्मृति : हुनु ता हो है पापा ?
थुम्राहाङ : अँ ।
स्मृति : (मायाले थुम्राहाङको आँखामा हेर्दै) तर तपाईंले मलाई कति धेरै माया गर्नुहुन्छ है, पापा ?
थुम्राहाङ : गर्नु त पर्छ । बुढाले बुढीलाई, बुढीले बुढालाई माया नगरे कसले गर्छ त ?

स्मृति : अँ, त्यो ता हो । त्यैपनि तपाईंले मलाई धेरै नै माया गर्नुहुन्छ नि ।

थुम्राहाङ : अँ, हो, यो भन्दा अझै धेरै माया त पछि गर्छु नि ल ।

स्मृति : पछि कहिले ?

थुम्राहाङ : निनाम्मा पेटमा भा'को बेलामा ।

स्मृति : (किस खाएर) थ्याङ्क यु पापा । तर, यो कुरा कसरी थाहा पाउनु भो ?

थुम्राहाङ : थाहा भैहाल्छ नि । बेबी पेटमा भा'को बेलामा त झन् धेरै माया गर्नुपर्छ ।

स्मृति : हो त पापा । अझै बेबी पेटमा भा'को बेलामा हर्मोनको कारणले कोहीकोही महिलाहरू रुन्छ, कराउँछ, झर्किन्छ, रिसाउँछ, चिच्याउँछ, असाधारण क्रियाकलापहरू गर्छ । त्यस्तो अवस्थामा झन् धेरै माया गर्नुपर्छ, केयर गर्नुपर्छ, सान्त्वना दिनुपर्छ । निनाम्मा पेटमा हुँदा मलाई त्यस्तो भयो भने झर्को नमानी धेरै माया गर्नु ल, पापा ।

थुम्राहाङ : ल ल, भै हाल्छ नि । म तपाईंलाई धेरै माया गर्छु । जुनीभरि माया गर्छु नि ल ।

स्मृति : थ्याङ्क यु पापा (झोलाबाट कुरकुरे निकालेर फुटाउँछिन् । कुरकुरेको एक टुक्रा थुम्राहाङलाई खुवाउँछिन् । बाँकी जुठो आफूले पनि खान्छिन् ।)

थुम्राहाङ : (कुरकुरे खाँदै) वेलकम मामु ।

स्मृति : (कुरकुरे खाँदै) पापा ।

थुम्राहाङ : (कुरकुरे खाँदै) हुँ ।

स्मृति : म कति भाग्यमानी छु है ?

थुम्राहाङ : कसरी ?

स्मृति : मैले तपाईंजस्तै बुझकी मान्छे चाहेको थिएँ । त्यो तपाईंमा पाएँ । त्यसैले म धेरै भाग्यमानी रै'छु ।

थुम्राहाङ : तपाईंभन्दा म झन् धेरै भाग्यमानी त ।

स्मृति : कसरी ?

थुम्राहाङ : मैले पनि तपाईंले जस्तै धेरै पढेको र सभ्य मान्छे चाहन्थे, त्यो तपाईंमा पाएँ । मेरो मेडिकल डाक्टरहुने ठूलो इच्छा थियो तर त्यो पूरा भएन । तैपनि तपाईं नर्स हुनुहुन्छ । त्यसैमा म खुसी छु, गर्वान्वित छु । अनि तपाईंभन्दा म झन् भाग्यमानी भइनँ त ?

स्मृति : (हाँस्दै) त्यसो भए हामी दुवैजना भाग्यमानी । मैले चाहेको जस्तो तपाईंलाई पाएँ । तपाईंले चाहानु भएको जस्तो मलाई पाउनु भयो । हाम्रो जोडीलाई त माङ[४]ले नै जुराएको रै'छ है ?

थुम्राहाङ : हो त नि । नत्र तपाईं कहाँ को ? म कहाँ को ? कसरी हाम्रो भेट हुन्थ्यो त ?

स्मृति : त्यो ता हो । यो सबै भाग्यको खेल हो ।

थुम्राहाङ : (भकानिएर रुँदै) तर, मामु, तपाईं भोलि जाँदै हुनुहुन्छ है ?

स्मृति : (आँसु पुछ्दै) अँ, जाँदैछु । तर, तपाईंले नै 'छिटो गए पो, छिटै आउँछ' भन्नु भा'को होइन, पापा ?

थुम्राहाङ : त्यो त हो । (आँसु पुछ्दै) तर, तपाईं गएपछि म एक्लै कसरी यहाँ बस्ने होला नि ?

४. मुन्दुमी ईश्वर ।

स्मृति : (आँसु पुछ्दै) के गर्नु त पापा ? म यहाँ बसेर पनि नहुने । बाबा-ममी र भाइ उतै हुनुहुन्छ । फेरि, मेरो बिएसी नर्सिङको पढाइ पनि यहाँ सकियो । मेरो आइ.एल.इ.[५]को म्याद पनि सकिनु लाग्यो । तपाईंलाई यहाँ एक्लै छोडेर जाने मन त मलाई पनि कहाँ छ र ? तैपनि हाम्रो भविष्यकै लागि भए पनि म युके जानैपर्छ, पापा ।

थुम्राहाङ : (आँसु पुछ्दै) त्यो ता हो मामु, तर तपाईंको अनुपस्थितिमा यो आकाश नै खुल्ला लाग्छ । यो धर्ती नै उजाड लाग्छ । यो संसारै शून्य लाग्छ । अनि यस्तो खुल्ला आकाश, उजाड धर्ती र शून्य संसारमा म एक्लै कसरी बाँच्नु मामु ? (भक्कानिएर पीडामा रुन्छ ।)

स्मृति : (सम्झाउँदै) पापा, यता हेर्नुहोस् त ? (आकाशतिर देखाउँदै) ऊ त्यो आकाशलाई हेर्नुहोस् त । त्यो आकाश खुल्ला छैन, त्यहाँ म छु । (चारैतिर देखाउँदै) ऊ यो धर्तीलाई हेर्नुहोस् त । त्यो धर्ती उजाड छैन, त्यहाँ म छु । (चारैतिर देखाउँदै) ऊ त्यो चारैतिर संसारलाई हेर्नुहोस् त । त्यो संसार शून्य छैन, त्यहाँ म छु । त्यसैले तपाईंलाई जहाँ-जहाँ खुल्ला लाग्छ, त्यहाँ-त्यहाँ मलाई खोज्नु । जहाँ-जहाँ उजाड लाग्छ, त्यहाँ-त्यहाँ मलाई खोज्नु । जहाँ-जहाँ शून्य लाग्छ, त्यहाँ-त्यहाँ मलाई खोज्नु । म

---

५. इनडिफिनेट लिभ टु इन्टर । यो नियम ब्रिटिस सरकारले सन् २००४ देखि ब्रिटिस गोर्खा परिवारको लागि लागु गरेको हो । यस नियमपछि ब्रिटिस गोर्खा परिवारले आवासीय भिसा पाएका छन् । आइ.एल.आर.सँगै गोर्खाली ज्ञान, सिप र सम्बन्ध पनि वेलायत नै भासिएको तितो सत्य छ ।

त्यहीँ रहनेछु । म तपाईंकै छेउमा हुनेछु । यो जुनीभरि म तपाईंकै हो । अनि मेरो शरीर मरेर गए पनि मेरो आत्मा सधैँ तपाईंसँगै रहिरहनेछ ।

थुम्राहाङ : (किस खाएर) थ्याङ्क यु मामु, थ्याङ्क यु । आइ एम भेरी ग्रेट फुल टु यु । आइ एम अलवएज विथ यु, मामु ।

स्मृति : थ्याङ्क यु पापा । आइ एम अल्सो अलवएज विथ यु । (भक्कानिएर रुएपछि आँसु पुछेर) तर, पापा आज मलाई किनकिन डर लागिरहेको छ ।

थुम्राहाङ : किन मामु ?

स्मृति : म युके गएपछि तपाईं नेपालमा एक्लै हुनुहुन्छ, म युकेमा । टाढो भएपछि भेट हुँदैन । भेट नभएपछि माया पनि गाढा हुँदैन होला । त्यो समयमा मैले मेरो उद्देश्य भन्दाभन्दै कतै तपाईंलाई बिर्सें भने ? (भक्कानिएर रुन्छिन् ।) ।

थुम्राहाङ : (भक्कानिएर रुँदै) त्यसो नभन्नुहोस् मामु । मलाई सबै भन्नुहोस्, तर छोडेर जाने कुरा नभन्नुहोस् । तपाईं बिना म एक्लै कसरी बाँच्नु मामु ?

स्मृति : (आँसु पुछेर) लु भो पापा । अब नरुनुहोस् । म तपाईंलाई कहिल्यै पनि भुल्दिँन । यदि भुलिहालेँ भने पनि माया मारेको नसम्झिनु है । म तपाईंकै हो । तपाईंको बाहेक अरू कसैको पनि हुनु सक्दिनँ । फेरि, माङ्खिममा विवाह गरिसकेपछि छुट्नु त के, छुट्ने कल्पनासमेत गर्नु हुँदैन ।

थुम्राहाङ : त्यै त मामु । सँगै बाँच्ने, सँगै मर्ने कसम

पनि खाइसकेको छौँ । फेरि, त्यो बेलामा हाम्रो निनाम्माको पनि भाग्य नै त्यति रै'छ । चाहेर पनि हामीसँगै राख्नु सकेनौँ । अहिले पनि धेरै दु:ख लाग्छ । धेरै चित्त दुख्छ । धेरै पीडा हुन्छ ।

स्मृति : के गर्नु त पापा ? हामीले चाहेर पनि त्यस्तो भा'को होइन । माङले नै ठगेपछि कसको के लाग्छ र ? तर पछिल्लो पल्टचाहिँ मैले धेरै सोचेँ । धेरै माया लाग्यो । साथैमा राखौँ जस्तो लाग्यो तर त्यो सम्भवै थिएन । नचाहँदा नचाहँदै गुमाउनु पर्दाचाहिँ धेरै दु:ख लाग्यो, धेरै मन रुयो, धेरै पीडा भयो ।

थुम्राहाङ : दु:ख त लाग्छ नि मामु, तैपनि मन बलियो पार्नु । चित्त नदुखाउनु । विवाहपछिको निनाम्मालाई हामीसँगै राखुँला । उसलाई हामीसँगै हुर्काउँला, पढाउँला, बढाउँला । तपाईंजस्तै ठूलो नर्स बनाउँला नि, हुँदैन ?

स्मृति : हुन्छ नि पापा । तर, के गर्नु ? जति नै भुल्नु खोजे पनि माया त लागिहाल्छ नि ।

थुम्राहाङ : त्यो ता हो । तर, विकल्पै नभएपछि कस्को के लाग्छ र, मामु ? (दुवै जनाले एक आपसमा हेराहेर गरेर किस खान्छन् ।)

स्मृति : (मायाले हेर्दै) के हो ? सगुन खानु मन लाग्यो ?

थुम्राहाङ : (स्वीकारोक्तिमा) अँ ।

स्मृति : (देब्रे हातले थुम्राहाङको नाक बटार्दै) अस्ति भरखरै खा'को होइन ?

थुम्राहाङ : (स्वीकारोक्तिमा) अँ, खानु ता खा'को । तैपनि ?

स्मृति : (मायाले हेर्दै) अहँ, हुँदैन । फेरि, अस्तिजस्तो

के-के मात्रै हुन्छ । बुबुचाहिँ अलिकति खानु । (वाहिबुङको फेदमा बसाउँदै) फेरि, म युके गएपछि बुबु पनि खानु पाउनु हुन्न । लु आउनुहोस् । अलिकति बुबु खानुहोस् । अरू चाहिँ पछि ल ।

थुम्राहाङ : (स्वीकारोक्तिमा) हुन्छ, मामु । (दुवै जना एकआपसमा हेराहेर गरेर किस खान्छन् । हुरिबतासहित आकाश गडगडाउँछ । विजुली चम्किन्छ । दुवै जना एकआपसको अँगालोमा बाँधिन्छन् । प्रकाश केही मधुरो हुन्छ । रमाइलो को धुन बज्छ । केही मानिसहरू यौनिकतामा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् । प्रकाश विस्तारै विलयन हुन्छ । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)

# दोस्रो दृश्य

स्थान : त्रिभुवन विमानस्थल
समय : दिउँसो
पात्रहरू : स्मृति र थुम्राहाङ
घटना : स्मृतिले थुम्राहाङलाई एयरपोर्टमा छोडेर युकेतिर जान्छिन् ।

(मानिसहरूको खैलाबैला हुन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । त्रिभुवन एयरपोर्टको डिपार्टचर गेटमा मानिसहरू ओहोरदोहोर गरिरहेका हुन्छन् । उनीहरूले बिभिन्न प्रकारका भेषभुषाहरू लगाएका छन् । स्क्रिनमा २० जुलाई २०१० लेखिएको छ । सो स्क्रिनमा हवाइ अवस्थाको बारेमा स्क्रोलिङ भइरहेको छ । त्यसको एक छेउमा थुम्राहाङ उभिरहेको छ । थुम्राहाङले सेतो सर्ट, जिन्सको खराने पेन्ट र छालाको कालो जुत्ता लगाएको छ । भित्रबाट स्मृति आउँछिन् । स्मृतिले सेतो टिसर्ट, निलो जिन्स पेन्ट र कपडाको खराने जुत्ता लगाएकी छिन् ।)

स्मृति : (शङ्कास्पदमा) मामा जानु भो ?
थुम्राहाङ : अँ, जानु भो ।
स्मृति : अनि बिन्दु दिदी ?
थुम्राहाङ : उहाँ पनि जानु भो ।
स्मृति : अनि, तपाईं मात्रै बाँकी ?

थुम्राहाङ : अँ, म मात्रै । अनि सबै समान मिलाइसक्यो ?

स्मृति : अँ, सकियो । (दुवैजना अँगालोमा बाँधिन्छन् । एकआपसको आँसु पुछिदिएर किस खान्छन् ।)

थुम्राहाङ : (आँसु पुछेर) मामु, अब तपाईं जानुहुन्छ है ?

स्मृति : (आँसु पुछेर) अँ । अब म जान्छु, पापा । तपाईं पनि राम्ररी घर जानुहोला । आफ्नो केयर राम्रो गर्नुहोला । म युके पुगेपछि फोन गर्छु । मेरो बारेमा चिन्ता नलिनु होला । जागिर खाएपछि खर्च पठाइदिन्छु । त्यो खर्चले ब्रिटिस काउनसिलमा पढेर आइइएलटीस[१]को इक्जाम दिनु । मिल्यो भने तपाईंलाई युके नै बोलाउँछु, तपाईं पढ्नु आउनु । तपाईं युके आउनु भयो भने बाबाममीलाई भनेर युकेमै विवाह गरौँला । मिलेन भने दुई वर्षपछि म आफैं नेपाल आउँछु । त्यसपछि विवाह गरेर सँगै बसौँला । अनि यो आउँदो जुलाइमा बाबाममी र भाइ सपरिवार नेपाल आउनुहुन्छ । त्यतिखेर उहाँहरूसँग मेरो हात माग्नुहोला । यदि उहाँहरू नेपाल आउनु भएन भने तपाईंहरू नै मलाई माग्नु युके आउनुहोला ।

थुम्राहाङ : हुन्छ, मामु । तपाईं जे भन्नुहुन्छ, त्यही गरौँला । सबै थोक तपाईंकै हातमा छ । म त तपाईंकै भरमा परेको छु ।

स्मृति : सबै कुरा मेरो हातमा कहाँ छ र पापा ? सबै माङ भरोसा हो । माङले हामी सबैको कल्याण गरुन् ।

थुम्राहाङ : थ्याङ्क यु मामु । अनि तपाईं पनि राम्ररी

१. इन्टरनेसनल इङलिस ल्याङग्वज टेस्टिङ सिस्टम।

जानुहोला । कुनै समस्या पऱ्यो भने मलाई सम्झिनुहोला । म तपाईंसँगै हुनेछु ।

स्मृति : हुन्छ पापा । म पनि तपाईंसँगै हुनेछु । तपाईंलाई सम्झिरहने छु । म तपाईंको मायालाई जुनीभरि शिरमा राखिरहनेछु । म तपाईंकै भएर जुनी काट्नु चाहन्छु ।

थुम्राहाङ : थ्याङ्क यु मामु ।

स्मृति : ल पापा । अहिले म पनि जान्छु । (पेन्टको गाजीबाट खैरो पोका निकालेर दिँदै) यो मेरो सामान सुरक्षित राखिदिनु है, पापा ।

थुम्राहाङ : (समाउँदै) हुन्छ, मामु तर यो पोकामा के छ ?

स्मृति : (पोकाको समान देखाउँदै) त्यहाँ हाम्रो विवाहको सिन्दुर र पोते छ । त्यो खैरो चोलोचाहिँ स्मृतिको लागि तपाईंलाई चिनो । मेरो अनुपस्थितिमा यही चोलोलाई म भएको महसुस गर्नु । यदि हाम्रो भेट नभई नै मरेँछु भने यहीँ चोलोलाई म भएको सम्झिएर जुनी काट्नु है पापा । (भक्कानिएर दुवैजना रुन्छन् ।)

थुम्राहाङ : (आँसु पुछ्दै) मामु तपाईंलाई केही पनि हुँदैन । तपाईं आउन्जेल यो तपाईंको सामान मेरो साथैमा राखिदिन्छु । तपाईं चिन्ता नलिनुहोला ।

स्मृति : ल ल पापा, अब मलाई ढिलो भयो, म जान्छु । तपाईं पनि राम्ररी घर जानुहोला ।

थुम्राहाङ : (भक्कानिएर रुँदै) हुन्छ मामु, तपाईं पनि राम्ररी जानुहोला । सेफ जर्नी ।

स्मृति : थ्याङ्क यु पापा ।

थुम्राहाङ : वेलकम मामु । (दुवैजना अँगालोमा बाँधिएर किस खान्छन् । दुवैजना पीडामा रुन्छन् ।

दुवैजनाले एकआपसको आँसु पुछिदिन्छन् ।)

स्मृति : (आँसु पुछेर अगाडि बढेर बिदाइको हात हल्लाउँदै) बाइ । टेक केयर है पापा ।

थुम्राहाङ : (भक्कानिएर पीडामा रुँदै) वाइ मामु । लङ लाइफ एन्ड सेफ जर्नी । (दुवैजनाले बिदाइको हात हल्लाउँछन् । स्मृति भित्र जान्छिन् । स्मृति गएतिर हेर्दै पीडामा थुम्राहाङ रुन्छ । केही क्षणपछि प्लेन उडेर गएको आवाज आउँछ । आँसु पुछेर थुम्राहाङ बाहिरिन्छ । केही मानिसहरू नृत्यको तालमा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् । प्रकाश विस्तारै विलयन हुन्छ । सबै आवाजहरू बिस्तारै बन्द हुन्छ ।)

# तेस्रो दृश्य

| | | |
|---|---|---|
| स्थान | : | माङ्खिम |
| समय | : | विहान |
| पात्रहरू | : | चाम्लोङमा र थुम्राहाङ । |
| घटना | : | चाम्लोङमाको प्रेम प्रस्तावलाई थुम्राहाङले अस्वीकार गर्छ । |

(चराचुरूङ्गीहरू चिरबिराइ रहन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको पृष्ठभूमिमा हरियो फाँट देखिन्छ । त्यो फाँटको बीचमा वाहिबुङ[1]को रुख छ । वाहिबुङको फेदमा माङ्खिम[2] छ । माङ्खिमको पेटीमा निराश भावमा थुम्राहाङ बसिरहेको छ । उनले सेतो सर्ट, जिन्सको खराने पेन्ट र छालाको कालो जुत्ता लगाएको छ । केही क्षणपछि चाम्लोङमाको प्रवेश हुन्छ । उनीले सेतो कुर्ता र सुरवाल र खैरो सेन्डल लगाएकी छिन् ।)

चाम्लोङमा : (नजिक आएर) थुम्राहाङ ।

थुम्राहाङ : (फर्किएर हेर्दै) के हो ?

चाम्लोङमा : कतिखेर आउनु भा'को ?

थुम्राहाङ : (बेवास्ता गर्दै) अगि नै ।

चाम्लोङमा : म अलिक ढिलो भएँ । आएम सो सरी ।

---

१. मुन्दुमी रुख । प्रत्येक मुन्दुमी प्रदर्शनमा वाहिबुङको पातसहितको डाला चाहिन्छ ।
२. मुन्दुमी मन्दिर । यसको बिचमा वाहिबुङको रुख हुन्छ ।

थुम्राहाङ : (बेवास्ता गर्दै) अलिकति मात्रै होइन, धेरै नै ढिलो भइसक्यौ । अब सरी मागेर के पाउँछौ ?

चाम्लोङमा : (अचम्म मान्दै) मतलब, मैले कुरा बुझिनँ नि ?

थुम्राहाङ : (बेवास्ता गर्दै) कुरा स्पष्टै छ नि । बाँकी कुरा आफैं बुझ ।

चाम्लोङमा : (आश्चर्य मान्दै) मैले तिम्रो कुरै बुझिन । भन्नु खोजेको कुरा के हो ?

थुम्राहाङ : (बेवास्ता गर्दै) सबै कुरा बिस्तारै बुझ्छौ । एकै चोटी सबै कुरा बुझेर पनि हुँदैन । (प्रसङ्ग बदल्दै) अब छोडिदेउ यो सब कुरा । बरु भन । मलाई किन यहाँ बोलाको ?

चाम्लोङमा : (अक्मकिँदै) कुरा के हो भने नि । (खोकेर कुरा मोड्दै) केही होइन । तिमीलाई हेर्नु मन लाग्यो, त्यसैले बोलाको ।

थुम्राहाङ : (बेवास्ता गर्दै) ठीकै छ, नभन । तर, जति तिम्रो कुरा लुकाउँछौ, त्यति नै तिमीलाई गाह्रो हुन्छ ।

चाम्लोङमा : (स्वीकारोक्तिमा) त्यो ता हो । त्यै भएर तिम्रो मायामा म पागलझैं भएको छु । (आँसु पुछेर) वास्तवमा थुम्राहाङ, म तिमीलाई माया गर्छु । म तिमीसँग जुनी बिताउनु चाहान्छु । (घोप्टीएर रुन्छिन् ।)

थुम्राहाङ : (भावुक भएर) आज फेरि मलाई ठूलो धर्मसङ्कटमा पार्‍यौ । यस्तो अवस्थामा मैले के उत्तर दिऊँ ?

चाम्लोङमा : (बेवास्ता गर्दै) मलाई थाहा छ, तिमी स्मृतिलाई माया गर्छौ । स्मृतिले पनि तिमीलाई माया गर्थ्यो । तर, अहिले ऊ बेखबर छ । सायद उसले युकेमा अर्कै बाटो रोजिसकेको हुनुपर्छ

तर तिमी भने यहाँ स्मृतिको मायामा पागलै भएको छौ । यस्तो अवस्थामा मेरो प्रेम प्रस्तावले तिमीलाई अप्ठ्यारो पारेको हुनुपर्छ ।

थुम्राहाङ : (स्वीकारोक्तिमा) हो, तिमीले सही कुरा भन्यौ तैपनि सधैँ किन यस्तो प्रस्ताव राख्छौ ?

चाम्लोङमा : ठीकै छ अबदेखि यस्तो कुरा गर्दिनँ र तिम्रो खुसीलाई पनि कहिलै खोस्दिनँ । तिमी जहाँ खुसी हुन्छौ, म पनि त्यहीँ खुसी हुनेछु । गल्ती मेरै हो । तिमीलाई आत्मैबाट माया गर्नु मेरो ठूलो भुल भयो । त्यसको सजाय अहिले भोग्दैछु ।

थुम्राहाङ : (बेवास्ता गर्दै) त्यो तिम्रो समस्याको कुरा हो । तिमी आफैँ एकोहोरो माया गर्छौ त, मेरो के को दोष ? जबरजस्ती तिमीलाई कसले एकोहोरो माया गर्नु ला'को थियो ? करले गु आउँछ ? (बाहिरिँदै) अब आइन्दा फेरि यस्तो कुरा गर्‍यौ भनेचाहिँ राम्रो हुनेछैन नि !

चाम्लोङमा : (आकाशतिर ढोग्दै) ओ माङ ! मैले किन यो मान्छेलाई एकोहोरो माया गरिरहेको हुँ ? (प्रकाश बिस्तारै विलयन भएर चाम्लोङमाको अनुहारमा स्थिर हुन्छ । केही मानिसहरू नृत्यको तालमा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)

# चौथो दृश्य

| | | |
|---|---|---|
| स्थान | : | थुम्राहाङको कोठा |
| समय | : | दिउँसो |
| पात्रहरू | : | थुम्राहाङ, आमा, बोन्तावामा र बाहिङमा । |
| घटना | : | बाहिङमाले थुम्रहाङलाई धेरै भावनामा नडुब्न सल्लाह दिन्छिन् । |

(बिरहको गीत बजिरहेको छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । सुनसान कोठामा किताबहरू छरपस्ट छन् । सिरानीतिरको भित्तामा स्मृतिको पेन्टिङ झुन्डिएको छ । सिरानीको छेउमा दराज छ । निराश मुद्रामा थुम्राहाङको प्रवेश हुन्छ । थुम्राहाङले सेतो सर्ट र खराने पेन्ट लगाएको छ । केही क्षणपछि स्मृतिको पेन्टिङलाई छाम्छ । दराज खोलेर खैरो पोकालाई निकालेर हेर्दाहेर्दै छातीमा राखेर थुम्राहाङ रुन्छ ।)

थुम्राहाङ : (आँसु पुछेर) अब त मेरो मामु युके गएको पनि धेरै दिन भयो । पहिला-पहिला त फोन गर्थ्यो, इमेल गर्थ्यो तर अहिले त सर्म्पकविहीन भयो । हुनु त नयाँ ठाउँ, नयाँ परिवेश, नयाँ देश, नयाँ भेष, नयाँ भाषा, नयाँ संस्कृति । सबै नयाँ । नयाँ देशमा मेरो मामुलाई गाह्रो त पर्दो हो । तैपनि मेरो फोन उठाए हुन्थ्यो । मेरो इमेलको रेस्पोन्स गरे हुन्थ्यो ।

आमा : (निलो बर्को हातमा लिएर प्रवेश गर्दै) ए ! तिमी आयौ ? (आमाले शरीरमा मखमाली चौबन्दी र लुङ्गी लगाएकी छिन् । उनीले कानमा सुनको मरवाडी, नाखमा सुनको ढुङ्ग्री-मुन्द्री, गलामा रेजी, दाहीने हातमा बाही र देब्रे हातमा घडी लगाएकी छिन् ।)

थुम्राहाङ : (खैरो पोका लुकाउँदै) हजुर ।

आमा : अनि मेरो नानीको खबर के छ ?

थुम्राहाङ : ठीकै छ, आमा ।

आमा : खबर आउँदैछ ?

थुम्राहाङ : हजुर ।

आमा : ल ल त्यसो भए ठीक छ । मैले सम्झेको छ भनिदिनु है ।

थुम्राहाङ : हुन्छ, आमा ।

आमा : (बर्को दिँदै) अनि यो निलो बर्को । ब्रुनाईको कोसेली । मेरो नानीलाई राखिदिनु है ।

थुम्राहाङ : (बर्को लिँदै) हुन्छ ।

बोन्तावामा : (प्रवेश गरेर) आमा, कान्छा भात पस्केको छु । भात खानु आउनुहोस् । (थुम्राहाङले हतारहतार बर्को लुकाउँछ । बोन्तावामाले शरीरमा टिसर्ट र लुङ्गी लगाएकी छिन् । गलामा सुनको चेन, देब्रे हातमा घडी र खुट्टामा चप्पल लगाएकी छिन् ।)

आमा : ल ल आयौँ, आयौँ ।

बोन्तावामा : (फर्किएर जाँदै) हुन्छ । छिटो आउनुहोस् है । भात सेलाइसक्यो ।

थुम्राहाङ : आमा, तपाईंहरू भात खाँदै गर्नुहोस् है । म एकछिनमा खान्छु ।

आमा : ल ल छिटो आऊ भात सेलाइसक्यो । बाहिङमाले पनि तिमीलाई भेट्नु आ'को छ । उसले सिटिङ रुममा तिमीलाई नै पर्खिरहेको छ ।

थुम्राहाङ : यतै पठाइदिनुहोस् न, आमा ।

आमा : (जाँदै) ल ल यतै पठाइदिन्छु ।

थुम्राहाङ : हुन्छ, आमा । (ल्यापटप खोलेर इमेल चेक गर्छ । निधारमा हात राख्दै) सो स्याड । आज पनि मेरो इमेलको कुनै रिप्लाई छैन । (अनुहार छोपेर पीडामा रुन्छ ।)

बाहिङमा : (प्रवेश गर्दै) दाजु, फेरि रुँदै हुनुहुन्छ ? (नजिक जाँदै) छ्या, कति रुनुहुन्छ हौ ? (बाहिङमाले शरीरमा टिसर्ट र पेन्ट लगाएकी छिन् । गलामा सुनको चेन, देब्रे हातमा घडी र खुट्टामा जुत्ता लगाएकी छिन् ।)

थुम्राहाङ : (आँसु पुछ्दै) के गर्नु त बाहिङमा, माया लागेर आएपछि । रुएरै नै त चित्त बुझाउनु छ ।

बाहिङमा : (सम्झाउँदै) दाजु, माया-माया भन्दैमा भविष्यलाई नै धरापमा पार्नु त भए न नि ! मन पो बुझाउनु पर्छ त ।

थुम्राहाङ : (प्रतिप्रश्न गर्दै) मन त बुझाउने नै हो । तर, कसरी बुझाउने ? जोसँग सँगै बाँच्ने, सँगै मर्ने वाचा गरेको थिएँ । उनै बेखबर भएपछि कसरी मन बुझाउनु ? तिमी आफैं भन त ?

बाहिङमा : (सम्झाउँदै) दाजु मन त जसरी हुन्छ, त्यसरी नै बुझाउनु पर्छ नि । भाउजूले पनि तपाईंलाई धेरै माया गर्नुहुन्छ । धेरै विश्वास गर्नुहुन्छ ।

थुम्राहाङ : खै होला ता नि ! तर, आजसम्म तिम्रो भाउजू

बेखबर छ । उसको मायामा मुटु जलिरहेको छ । यो जलेको मन एकैचोटी कहाँ निभ्छ र ? सपनामा पनि सधैँ तिम्रो भाउजूलाई मात्रै देख्छु । तर, ब्युँझदा म एक्लै हुन्छु, ऊ हुँदैन । तिम्रो भाउजूको मायामा बाँच्नु साह्रै गाह्रो भयो, बाहिङमा ।

बाहिङमा : गाह्रो त भइहाल्छ नि, दाजु । मन पो बलियो पार्नुपर्छ त । तपाईंलाई जस्तै भाउजूलाई पनि गाह्रो भइरहेको होला । त्यो पनि बुझ्नु पर्‍यो नि ! पढाइ सकिएपछि भाउजू पनि नेपाल आइहाल्नु हुन्छ नि !

थुम्राहाङ : खै होला नि ! मैले देखेको छैन । उसले पनि खबर गरेको छैन । त्यै भएर आँसुमा डुबेर हाँसेको छु । पीडालाई भुलेर बाँचेको छु ।

बाहिङमा : दाजु तपाईं धेरै भावनामा डुब्नुहुन्छ । आफूलाई भन्दा अरूलाई धेरै माया गर्नुहुन्छ । अबको जमानामा व्यावहारिक हुनुपर्छ । भावनाले जीवन चल्दैन ।

थुम्राहाङ : नचले, नचलोस् । मनको कुरा रोकेर रोकिँदैन । बिछोडको पीडा भोग्नेलाई मात्र थाहा हुन्छ । देख्नेलाई के थाहा ?

बाहिङमा : अँ, त्यो त हो । फेरि, तपाईं धेरै भावुक हुनुहुन्छ । अस्ति पनि आवेगमा झन्नै आत्महत्या गर्नुभयो । अबदेखि चाहिँ त्यस्तो नसोच्नु है । तपाईंजस्तो बुद्धिजीवीले त्यसरी आत्महत्या गर्दा यो समाजले पनि के भन्छ ?

थुम्राहाङ : समाजले के भन्छ, त्यो समाजको कुरा हो तर म कस्तो अवस्थामा गुज्रेको छु, त्यो

मलाई मात्रै थाहा छ । साँच्चै भन्ने हो भने, मलाई बाँच्नु पनि मन छैन । जीवन जिउनु नै व्यर्थ लागिरहेको छ । आफैँले आफैँलाई घृणा लागिरहेको छ । त्यैपनि तिम्रो भाउजूको मायामा बाँचिरहेको छु ।

बाहिङमा : दाजु, हरेस नखानु होस् । जीवन यस्तै हो । कहिले हाँसो, कहिले आँसु । संसारै मायामा अल्झेको छ । माया नहुँदो हो त, यो संसार नै रहँदैनथ्यो । संसार अल्झाउनुकै लागि भए पनि माया त चाहिन्छ नि । त्यही मायामा नै जीवन बाँचेको हुन्छ ।

थुम्राहाङ : खै होला ता नि !

बाहिङमा : ल दाजु अहिले हतार छ, म गएँ । बाँकी कुरा पछि गरौँला ।

थुम्राहाङ : ल ल । (बाहिङमा जान्छिन् । प्रकाश विस्तारै विलयन भएर स्मृतिको फोटोमा स्थिर हुन्छ । केही मानिसहरू नृत्यको तालमा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)

# पाँचौं दृश्य

| | | |
|---|---|---|
| स्थान | : | माङ्खिम |
| समय | : | बिहान |
| पात्रहरू | : | याम्फुहाङ, याक्थुङबा र थुम्राहाङ । |
| घटना | : | थुम्राहाङले माङखिममा भाकल गरेर स्मृतिको फिर्तीको लागि माङसँग बल माग्छ । |

(चराचुरूङ्गीहरू चिरबिराइ रहन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको पृष्ठभूमिमा हरियो फाँट देखिन्छ । त्यो फाँटको बीचमा वाहिबुङ[1]को रुख छ । वाहिबुङको फेदमा माङ्खिम[2] छ । सिमसिम पानी परिरहेको छ । निराश मुद्रामा थुम्राहाङको प्रवेश हुन्छ । उनले सेतो सर्ट, जिन्सको खराने पेन्ट र छालाको कालो जुत्ता लगाएको छ । उसले आफ्नो सर्टको गोजीबाट खैरो पोका निकालेर माङ्खिममा छुवाउँछ ।)

थुम्राहाङ : (खैरो पोकालाई निधारमा राखेर) ओ माङ ! मेरो स्मृतिलाई केही पनि नहोस् है । उसको मन छिटै फर्कियोस् । आज अप्रिल २४ तारिक हो । आजकै दिन यो माङ्खिममा स्मृति र मैले विवाह गरेको थियौँ । सँगै मर्ने, सँगै जिउने

१. मुसुरे कटुस प्रजातीको मुन्दुमी रूख ।
२. मुन्दुमी मन्दिर ।

कसम खाएको थियौँ तर अहिले म एक्लै छु, ऊ छैन । ऊ आएपछि तपाईंलाई देखाउनु फेरि ल्याउँछु । त्यतिखेर भोकछेलेक[३]ले तपाईंलाई पूजा गर्छु । उसलाई सुख होस् । शान्ति होस् । उसको आयु दीर्घायु होस् । उसले चिताएको काम पूरा होस् । (माङ्खिमलाई तिनपल्ट ढोग्छ । वरिपरि माङ्खिमलाई घुमेर सिँढीमा बसेर बस्छ । पीडमा रुन्छ ।)

यािम्फुहाङ : (प्रवेश गर्दै) ओ थुम्राहाङ । (उनले ढाकाको टिसर्ट, जिन्सको पेन्ट र कालो बुटजुत्ता लगाएको छ।)

थुम्राहाङ : (बिस्तारै उठेर) ए, याम्फुहाङ । तिमी ?

याम्फुहाङ : अँ, म । अनि तिमी एकाबिहानै के गर्नु आ'को ? कहिल्यै माङ्खिम आउँदैन थियौ त ?

थुम्राहाङ : अँ, त्यतिकै आ'को ।

याम्फुहाङ : अनि तिम्रो स्मृतिको खबरचाहिँ के छ ?

थुम्राहाङ : ठीकै छ ।

याम्फुहाङ : तिम्रो स्मृति त अर्कैसँग लागेको छ रे नि ।!

थुम्राहाङ : कसले भन्यो ?

याम्फुहाङ : केटाहरूले भन्दै थियो । फेरि सबैतिर त्यस्तै हल्ला छ ।

थुम्राहाङ : (आँसु पुछ्दै) खै ?

याम्फुहाङ : अब के गर्छौ त ? तिमी यहाँ छौ, तिम्रो स्मृति युकेमा । युकेको ओपन सेक्स जोनमा तिम्रो स्मृति रमाउँदै होला । तिमी भने के रुँदै बस्छौ ? छोडिदेउ रुनु । बरु, अर्कै गर्लफ्रेन्ड बनाएर मोज गर ।

---

३. माङको नाममा भाकल गरिएको माउ सुंगुरको बच्चा । आपतकालीन अवस्थाबाट बच्नको लागि माङका नाममा भोकछेलेको भाकल गरिन्छ ।

थुम्राहाङ : त्यसो नभन, याम्फुहाङ । ऊ एक न एकदिन मलाई सम्झिएर आउँछ ।

याम्फुहाङ : अँ, आउनु त आउँछ तर काखमा बच्चा र बुढालाई लिएर । अनि खान्छौ घोँगा ।

थुम्राहाङ : (आक्रोशमा) याम्फुहाङ । मुखमा जे आयो, त्यही नबोल ।

याम्फुहाङ : (इन्सल्ट गर्दै) नरिसाउन यार । किन रिसाएको ? सधैँ मुर्खे झ्वाँकले काम गर्दैन क्या ।

थुम्राहाङ : त्यो मलाई राम्ररी थाहा छ । तिमीले भनिरहनु पर्दैन ।

याम्फुहाङ : ल ल । जे सुकै गर । म केही भन्दिन । बरु हिम्मत छ भने त्योभन्दा राम्रो केटी विवाह गरेर देखाउन । तिमी जस्तो विद्वान्ले रुएर हिँड्दा अरूले पनि के भन्छ ? तिमीले ख्याल गरेको छौ ?

थुम्राहाङ : अरूले के भन्छ । त्यो मलाई मतलब छैन । म के गर्छु त्यो चाहिँ महत्वको कुरा हो ।

याम्फुहाङ : हो, त्यही भएर त तिम्रो गल्फेन्डले पनि छोड्यो त । यस्तै ताल हो भने गल्फ्रेन्डले मात्रै होइन, बुढीले पनि सुतेकै ठाउँमा छोडेर जान्छ ।

थुम्राहाङ : ल ल । धेरै दर्शन नछाँट । 'बाँचेर पनि मर्नेहरूलाई, मरेर पनि बाँच्नु पर्छ' भन्ने कुरा के थाहा ?

याम्फुहाङ : ल ल तिम्रो खुसी गर । मेरो भन्नु केही छैन ।

थुम्राहाङ : भन्नु पनि पर्दैन ।

याक्थुङबा : (प्रवेश गर्दै) ओ हो ! के छ साथी हो ? धेरै समयपछि भेट भो नि ! (उनले फेङगा, जिन्सको पेन्ट र कालो बुटजुत्ता लगाएको छ ।)

यामफुहाङ : के गर्छौ त काजी ? सबै जना आ-आफ्नै काममा व्यस्त भएपछि ।

याक्थुङबा : त्यै त । अनि तिमीहरूको खबरचाहिँ के छ ?

यामफुहाङ : ठीकै छ । (प्रतिप्रश्न गर्दै) अनि तिम्रो नि ?

याक्थुङबा : मेरो झन् झकास छ । (प्रतिप्रश्न गर्दै) अनि थुम्राहाङ तिम्रो ?

थुम्राहाङ : मेरो पनि ठीकै छ ।

यामफुहाङ : के ढाँट्छौ यार ? सिधैं भन न गर्लफ्रेन्डले छोड्यो भनेर । साँचो कुरा भन्नुलाई पनि किन धक मान्छौ ?

याक्थुङबा : त्यै त । मैले पनि त्यस्तै सुनेको थिएँ । के यामफुहाङले भनेको कुरा सत्य हो ?

थुम्राहाङ : (जाँदै) ल, मलाई हतार छ, म गएँ है ।

याक्थुङबा : (अचम्म हुँदै) के भा'को होला ? धेरै वर्षपछि भेट भा'को । बोल्दाबोल्दै हिँड्यो ।

यामफुहाङ : छोडिदेऊ उसलाई । उसको गर्लफ्रेन्डले धोका दिएपछि अलिक ठिँस भा'को छ ।

याक्थुङबा : कसरी थाहा पायौ ?

यामफुहाङ : आफैं हेर न थुम्राहाङलाई । थाहा पाइहाल्छौ नि!

याक्थुङबा : कस्तो रै'छ है ? यो माया भन्ने कुरा पनि ?

यामफुहाङ : त्यै त भन्नै नसकिने । अब हामी पनि जाऔं ।

याक्थुङबा : ल ल जाऔं, जाऔं । (दुवैजना जान्छन् । प्रकाश विलयन भएर माङ्खिममा स्थिर हुन्छ । केही मानिसहरू नृत्यको तालमा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)

# छैटौं दृश्य

| | | |
|---|---|---|
| स्थान | : | थुम्राहाङको कोठा |
| समय | : | बेलुका |
| पात्रहरू | : | थुम्राहाङ, बाहिङमा, आमा, खलिहाङ र बोन्तावामा । |
| घटना | : | थुम्राहाङको भावनामा असहयोग हुन्छ । |

(ह्याप्पी बर्थ डेको सङ्गीत बजिरहेको छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । थुम्राहाङको कोठा सुनसान छ । कोठामा किताबहरू लथालिङ्ग छन् । सिरानीको भित्तामा स्मृतिको पेन्टिङ झुन्डिएको छ । कोठामा टेबल छ । टेबलमाथि स्मृतिको फोटो छ । फोटोको अगाडि केक छ । केकमा '२६औं ह्याप्पी बर्थ डे टु यु स्मृति' लेखिएको छ । केकको वरिपरि २६ वटा क्यान्डिल बलिरहेका छन् । थुम्राहाङले उभिएर ताली बजाइरहेको छ । उनले सेतो सर्ट र जिन्सको खराने पेन्ट लगाएको छ । केही समयपछि बर्थ डेको सङ्गीत बिस्तारै मधुर भएर रोकिन्छ । बाहिङमाले छक्क परेर हेरिरहेकी छिन् । उनीले टिसर्ट र सेतो पेन्ट लगाएकी छिन् ।)

थुम्राहाङ : (पीडामा आँसु पुछ्दै) ह्याप्पी बर्थ डे टु यु । ह्याप्पी वर्थ डे टु मामु । ह्याप्पी बर्थ डे टु यु ।

आज मे ५ तारिक हो अर्थात् तपाईंको २६औं जन्मोत्सव हो । आजकै दिन तपाईंले यो धर्तीमा पहिलोपल्ट पाइला टेक्नुभएको थियो । त्यसैले सधैंको वर्षझैँ यस वर्ष पनि आज तपाईंको जन्मदिन मनाइदिइरहेको छु । सायद तपाईंले पनि आफ्नो जन्मदिन अहिले मनाइरहनु भएको होला । तपाईंको दीर्घायु होस् । चिताएको काम पूरा होस् । तपाईंको जीवन सधैं सुखमय बितोस् । (भक्कानिएर रुँदै) मामु, तपाईं छिटै फर्किएर आउनु होला । म तपाईंलाई नै पर्खिरहनेछु । जुनीभरि तपाईंलाई नै माया गरिरहने छु । (आँसु पुछेर क्यान्डिल फुकेर निभाउँछ । केक काटेर स्मृतिको फोटोलाई खुवाउँछ ।बाहिङमालाई पनि खुवाउँछ ।)

बाहिङमा : (केक खुवाउँदै) दाजु, तपाईं पनि खानुहोस्, भाउजूको बर्थ डे केक ।

थुम्राहाङ : (केक खाँदै) थ्याङ्क यु तर बाहिङमा, यो कुरा अरूलाई नभन है ।

बाहिङमा : (प्रतिप्रश्न गर्दै) किन दाजु ?

थुम्राहाङ : (केक खाएर रुँदै) हैन, अरूले थाहा पायो भने लाज हुन्छ नि ।

बाहिङमा : (स्वीकारोक्तिमा) ल, ल । भन्दिनँ, भन्दिनँ । तपाईंको मनको कुरा म राम्ररी बुझ्छु । यो कुरा कसैलाई पनि भन्दिनँ । (प्रसङ्ग बदल्दै) बरु अब भो, त्यति नै नरुनुहोस् । भाउजू पनि छिटै आइहाल्नु हुन्छ नि । किन यति धेरै चिन्ता लिनु हुन्छ ? जति माया गर्‍यो, उति नै माया टाढा हुन्छ । छोडिदिनुहोस्, सब कुरा । जुत्ता भए,

खुट्टा मुला जत्ति पनि पाइन्छ । त्यो निष्ठुरी खुट्टालाई केको टनटन ? तपाईंलाई पनि कति सम्झाएँ तर सकिनँ । अब भाउजूको मायामा जागित्रै हुनुहुने भो । तपाईंको यो पागलपन देखेर म पनि पागलै भैसकेँ । (जुत्ता लगाएर जाँदै) लु, म गएँ ल  दाजु ।

थुम्राहाङ : चिया त खाएर जाऊ ।

बाहिङमा : होइन, नखाने । मलाई हतार छ अहिले जान्छु ।

थुम्राहाङ : ल, ल, जाऊ, जाऊ ।

बाहिङमा : (रोकिएर आउँदै) ए...म ता कस्तो भुलक्कड । भुसुक्कै पो बिर्संदो रैछु । अँ साँच्चि ता बधाइ छ, तपाईंलाई ।

थुम्राहाङ : (अचम्म मान्दैं) लौ, केको बधाइ नि ! फेरि त्यस्तो बधाइ खाने खालको काम ता केही गरेजस्तो लाग्दैन त मैले ।

बाहिङमा : त्यसो हैन दाजु । तपाईं नाट्यकर्मी महासङ्घ नेपालको सल्लाहकार हो। तपाईंले नाट्यविधामा पिएचडी गर्नु भयो । यो गर्वकै कुरा हो । त्यो पिएचडीले तपाईंको मात्रै होइन, सम्पूर्ण नाट्यकर्मीहरूकै शिर उच्च भा'को छ । त्यसैले हाम्रो संस्थाले तपाईंलाई यही मार्च २० तारिकको दिन बृहत् कार्यक्रम राखेर सम्मान गर्दैछ । त्यो सम्मानको लागि तपाईंलाई यो निमन्त्रणा पत्र दिनु आएको हुँ । (चिठी दिँदै) यो तपाईंको सम्मानसहितको चिठी । जसरी भए पनि त्यो सम्मान कार्यक्रममा तपाईं आइदिनुपर्छ है दाजु ।

थुम्राहाङ : (स्वीकारोक्तिमा) ल, ल । तिमीले भनेपछि

नआउने कुरै भएन । म आउँछु चिन्ता लिनु पर्दैन । ढुक्क हौ । अनि मलाई संस्थागत रूपमा सम्मान गर्नु लाग्नु लागेकोमा तिमीलगायत तिम्रो समुहलाई पनि मुरीमुरी धन्यवाद ।

बाहिङमा : वेलकम दाजु । दाजु अहिले हतार छ । म जान्छु ल । पछि आउँछु ।

थुम्राहाङ : लौ, लौ ।

बाहिङमा : (जार्दै) अनि दाजु । म आएको कुरा तुम्मा[1]लाई पनि सुनाइदिनु है ।

थुम्राहाङ : लौ, लौ, सुनाइ दिउँला, सुनाइ दिउँला । (दराजमा रहेको पिएचडीको प्रमाणपत्र निकालेर हेर्दै) मैले नाटकमा पिएचडी गरेँ । यो गर्वको कुरा हो तर मेरो समुदायलाई वास्तै छैन । उनीहरूलाई वास्ता छ त केवल कसरी पैसा कमाउने ? कसरी मोजमस्ती गर्ने ? कसरी अरूको अगाडि देखासेखी गर्ने ? कसरी खोक्रो सान देखाउने ? (लामो सास तान्दै) यो समाजको चर्तिकला देखेर पनि अचम्मै लाग्छ । अरू समुदायमा भए यो पिएचडीको कति महत्व हुन्थ्यो ? यसको कति सम्मान हुन्थ्यो ? तर अँहँ, मेरो समुदायमा यो पिचडीको मूल्य कुन चराको नाम हो पत्तै छैन । पिएचडीको महत्व पनि थाहा छैन । यो समाज शिक्षित छ तर चेतनशील छैन । शिक्षित भएर पनि चेतना नहुँदा दुःख लाग्छ । त्यसैले यो समाजमा पैसाको मात्रै सम्मान छ तर शिक्षाको छैन । यो दुःख लाग्दो कुरा हो

१. आमा वा बाबाको दिदी ।

तर केही गर्नु सकिने अवस्था पनि छैन । सायद यो भूमण्डलीकरणको प्रभाव हो । पूर्वोउत्तर आधुनिकवादको करामत हो । (टाउकोमा हात राख्दै) उफ्...

आमा : (सशङ्कित भएर प्रवेश गर्दै) के हो चालामाला ? अलिक होस गर है । (आमाले शरीरमा मखमाली चौबन्दी र लुङ्गी लगाएकी छिन् । उनीले कानमा सुनको मरवाडी, नाखमा सुनको ढुङ्ग्री-मुन्द्री, गलामा रेजी, दाहीने हातमा बाही र देब्रे हातमा घडी लगाएकी छिन् ।)

थुम्राहाङ : (अचम्म हुँदै) किन आमा ? के भो र ?

आमा : (आक्रोशमा) अझै थाहा नपाएजस्तो गर्छौ ?

थुम्राहाङ : मैले के गरेँ र आमा ?

आमा : (आक्रोशमा) के गरेँ र अरे ? अघि यहाँबाट जाने केटीचाहिँ को हो नि ? नचाहिँदो काम नगर है ?

थुम्राहाङ : (आक्रोशमा) आमा तपाईं यो के भन्दै हुनुहुन्छ ?

आमा : (आक्रोशमा) म जे भन्दै छु, त्यो ठीकै भन्दैछु । स्मृति हुँदाहुदै को केटी कोठामा ल्याउँदै छौ ?

थुम्राहाङ : (आक्रोशमा) आमा, कुरै नबुझी मलाई आरोप लाउँदै हुनुहुन्छ । (ढोकालाई जोडले हिर्काउँछ ।)

खलिहाङ : (हतारिएर प्रवेश गर्दै) के भो ? किन करा'को ? (उनले शरीरमा टिसर्ट र हाफ पेन्ट लगाएको छ । गलामा सुनको सिक्री र खुट्टामा कपडाको जुत्ता लगाएको छ ।)

बोन्तावामा : (विस्तारै प्रवेश गर्दै) हैन, यो के को तमासा

हो ? (बोन्तावामाले शरीरमा टिसर्ट र लुङ्गी लगाएकी छिन् । गलामा सुनको चेन, देब्रे हातमा घडी र खुट्टामा चप्पल लगाएकीछिन् ।)

खलिहाङ : काम छैन, काज छैन । अहिलेसम्म एक पैसा कमा'को छैन । बुढो भैसक्यो । घरमै कोच्रिएर बसेको छ । (थुम्राहाङतिर हेर्दै) यो घर नभा'को भए के गर्थिस् ?

आमा : (खलिहाङतिर हेर्दै) किन भाइलाई गाली मात्रै गरिराख्छौ ? भाइले पनि त एक दिन कमाइ हाल्छ नि, पढेलेखेको छ । उसको भुँडी आफैं पालिहाल्छ नि !

खलिहाङ : (इन्सल्ट गर्दै) पाल्छ, यस्तो ग्वाँजेले ? उसको साथीहरूले कस्तोकस्तो प्रगति गरिसक्यो । यो ग्वाँजे भने जहाँको त्यहीँ ।

आमा : केको जहाँको त्यहीँ ? भाइले पनि त त्यत्रो किताब लेखिसकेको छ । फिलिम खेलिसकेको छ नि !

खलिहाङ : (प्रतिवाद गर्दै) किताबले खानु दिन्छ ? फिलिमले लाउनु दिन्छ ? जागिर खानु पर्दैन ? रल्लिएर हुन्छ ?

आमा : (प्रतिवाद गर्दै) दिन्छ नि, किन दिँदैन ? खानु नदिए पनि नाउँसुवास दिन्छ । मरेपछि उसले लेखेको किताब रहिरहन्छ । सबै काममा खानै पर्छ भन्ने छ र ? जागिर पनि विस्तारै खान्छ नि । किन हकारिरहेको सधैँ ?

खलिहाङ : ल ल । अब यो कुरा गरेर फाइदा छैन ।

आमा : (बाहिरिँदै) हेप्नु पाएँ भन्दैमा कति हेपेको ?

बोन्तावामा : ल कान्छा अब यसरी हुँदैन । स्मृतिले खबर

नगरेपछि युकेतिरै अर्को विवाह गऱ्यो होला । विदेशमा कपडा फेरेजस्तै गर्लफ्रेन्ड-ब्वाइफ्रेन्ड फेर्छ । त्यो त्यहाँको चलन नै हो । त्यो कुरा आफैँले पनि बुझ्नुपर्छ । त्यसैले अब खिखाम्छा[२]को मेरो साथी छ । उसलाई नै विवाह गर्नुहोस् ।

खलिहाङ : (जङ्गिँदै) अब त्यसै गर, कान्छा । आमा पनि बुढी हुनुभयो । अब तेरो भाउजूको साथीलाई नै विवाह गरेर यो घर रुङ्दै बस् । आखिरी घर रुङ्ने मान्छे पनि छैन ।

थुम्राहाङ : (प्रतिवाद गर्दै) म विवाह गर्दिनँ ।

खलिहाङ : (आवेशमा) विवाह नगरेर के गर्छस् त ? खुरुक्कै विवाह गर् । भनेको मान् ।

थुम्राहाङ : (जङ्गिँदै) गर्दिनँ भनेपछि गर्दिनँ । करले हुन्छ ?

खलिहाङ : (आवेशमा) तँलाई यहाँ राजाजस्तो बसेर कसले खानु दिन्छ ?

थुम्राहाङ : (आक्रोशमा) नदिए नदेऊ न त । दिनैपर्छ भनेर कसले कर ला'को छ र ? मेरो एउटा ज्यान त हो नि । जसरी भए पनि पालिहाल्छु नि ! तिमीहरूले जेजे भन्छौ, त्यैत्यै मान्नुपर्छ भन्ने कर छ र ? (आवेशमा बाहिरिँदै) तिमीहरूको घरमा तिमीहरू नै बस, म बस्दिन ।

खलिहाङ : (थुम्राहाङतिर हेर्दै) हेर न यसको बुद्धि, जाबो एउटा केटी नपाउँदा यस्तो छ ताल । हैन, यसको जीवन कसरी चलाउँछ होला हँ ? (दुवै जना बाहिरिन्छन् । प्रकाश विस्तारै विलयन

---

२. खिखाम्छा भोजपुर क्षेत्रको मुन्दुमी नाम हो ।

भएर स्मृतिको तस्बिरमा स्थिर हुन्छ ।केही मानिसहरू नृत्यको तालमा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् ।)

# सातौं दृश्य

| | | |
|---|---|---|
| स्थान | : | माङ्खिम |
| समय | : | दिउँसो |
| पात्रहरू | : | चाम्लोङमा, थुम्राहाङ र कोँइचमा । |
| घटना | : | स्मृति नेपाल आएको थुम्राहाङ थाहा पाउँछ । |

(चिराचुरूङ्गीहरू चिरबिराइ रहन्छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । हिमालयको पृष्ठभूमिमा हरियो फाँट देखिन्छ । त्यो फाँटको बीचमा वाहिबुङ[1]को रुख छ । वाहिबुङको फेदमा माङ्खिम[2] छ । माङ्खिममा थुम्राहाङको प्रवेश हुन्छ । थुम्राहाङले आफ्नो गोजीबाट खैरो सानो पोका निकालेर माङ्खिमलाई तीनपल्ट छुवाउँछ । त्यो पोकालाई छातीमा राखेर भक्कानिएर रुन्छ । थुम्राहाङले सेतो सर्ट, जिन्सको खराने पेन्ट र छालाको कालो जुत्ता लगाएको छ । त्यहीबेला चाम्लोङमाको प्रवेश हुन्छ । उनीले सेतो कुर्ता, सुरवाल र सेन्डल लगाएकीछिन् ।)

चाम्लोङमा : (नजिक आएर) थुम्राहाङ ! फेरि तपाईं माङ्खिममै हुनुहुन्छ ?

थुम्राहाङ : (आँसु पुछेर) अँ, माङ्खिम मै छु । फेरि किन आयौ त ?

१. मुन्दुमी रुख । प्रत्येक मुन्दुमी प्रदर्शनमा वाहिबुङको पातसहितको डाला चाहिन्छ ।
२. मुन्दुमी मन्दिर । यस मन्दिरको बनौट गोलाकारमा हुन्छ । यसको बिचमा वाहिबुङको रुख हुन्छ ।

चाम्लोङमा : त्यतिकै घुम्दै-घुम्दै ।

थुम्राहाङ : सधैँ घुमेर हुन्छ ?

चाम्लोङमा : त्यो ता हुँदैन ।

थुम्राहाङ : अनि ?

चाम्लोङमा : मैले तपाईंलाई भुल्ने धेरै प्रयास गरेँ तर अँहँ, सकिनँ । तपाईंको मायामा पागलै भएँ । मेरो पढाइ पनि बिगारेँ । परीक्षा पनि बङ्क गरेँ । तपाईंलाई भुल्नुको लागि देशपरदेश घुमेँ तैपनि भुल्नै सकिनँ । मलाई थाहा छ कि, तपाईंले मलाई स्वीकार्नु हुन्न भनेर तै पनि तपाईंलाई भेटिरहेको छु । तपाईंलाई भेट्दा मन शान्ति हुन्छ, आत्मबल बढ्छ । पिरती टुट्दा सारै गारो हुँदोरहेछ । सायद, तपाईंलाई पनि मलाई जस्तै गारो भइरहेको होला । तपाईंको मायाले मलाई सताए जस्तै तपाईंलाई पनि स्मृतिको मायाले सताएको होला । आत्माभित्रै मुटु छियाछिया परेको होला । छातीभित्रै आगो दन्किएको होला ।

थुम्राहाङ : हो, तिमीले ठीकै भन्यौ । अहिले मलाई तिमीले भनेझैँ धेरै गारो भइरहेको छ । स्मृतिको मायामा पागलै भएको छु । फेरि उसलाई सधैँ राती सपनामा मात्रै देख्छु । प्रत्येक रातको सपनामा ऊ हाँसिरहेको हुन्छ, रमाइरहेको हुन्छ, खेलिरहेको हुन्छ तर ब्युँझिँदा म एक्लै हुन्छु, स्मृति हुँदैन । उसको मायाले मलाई धुरुधुरु नै रुवायो । बाँच्नै गारो बनायो ।

चाम्लोङमा : त्यो त हो, आफ्नो मनको फूल अरूले नै टिपेर लगेपछि पीडा हुनु त स्वाभाविकै हो ।

(दर्शकहरूतिर हेर्दै) यस्तो पीडा सायद गहिरो मायामा फसेकोहरूलाई मात्रै थाहा होला तर के गर्नु ? मन परेको फूल सधैँ आफ्नो हुँदैन रहेछ । अरूले पनि टिपेर लाँदोरहेछ । यो कुरा भनिरहँदा तपाईंहरूको चित्त दुख्ला तर तितो सत्य यही हो । मैले पनि चाहेको माया कहिल्यै पाइनँ । अब पाउने आशा पनि गर्दिनँ । माया पाउनु मात्रै होइन रहेछ, गुमाउनु पनि माया नै रहेछ । (थुम्राहाङतिर हेर्दै) त्यसैले तपाईं जहाँ खुसी हुनुहुन्छ, म पनि त्यहीँ खुसी हुन्छु । तपाईंको भविष्य सधैँ उज्ज्वल रहोस् । सधैँ खुसी रहनु, सुखी रहनु । मैले तपाईंलाई नपाए पनि मेरो माया सदैव तपाईंलाई नै छ । आज मैले तपाईंलाई गुमाएर पनि खुसी नै छु । (भक्कानिएर रुएपछि) खुसी हुनु मेरो रहर होइन, बाध्यता हो ।

थुम्राहाङ : के गर्छौ त चाम्लोङमा, भाग्यमै नलेखेपछि ? तिमीले मलाईं धेरै माया गर्‍यौ तर पाउनु सकेनौ । मैले पनि स्मृतिलाई आत्मैबाट माया गरेँ तर पाउनु सकेको छुइन । सायद धेरै माया गर्दा आफ्नो मान्छे पाइँदैन रहेछ । (दर्शकहरूतिर हेर्दै) हुनु त यो कुरा पहिला नै स्मृतिले भनेकै थियो तर मैले विश्वास गरिनँ । उसले जे भनेको थियो, आज त्यही भइरहेको छ ।

चाम्लोङमा : के भनेको थियो र स्मृतिले ?

थुम्राहाङ : 'धेरै माया गर्‍यो भने, माया छुट्छ' भन्थ्यो । लगभग आज त्यस्तै भयो । स्मृति युकेमा छ,

म नेपालमा । युके गएपछि उसले केही दिन मात्रै खबर गर्‍यो तर बाँकी दिन मलाई सधैँ रुवायो । अहिलेसम्म खबर पनि गरेको छैन, ऊ बेखबर छ ।

चाम्लोङमा : अनि यत्रो वर्ष किन पर्खेको त ?

थुम्राहाङ : खै, त्यो त के थाहा ? पर्खिँदै जाँदा समय बित्यो । समय बितेको पत्तै भएन । (प्रतिप्रश्न गर्दै) अनि तिमीले चाहिँ मलाई किन पर्खेको त ? मेरो माया अन्तै छ भनेर थाहा हुँदाहुँदै पनि ?

चाम्लोङमा : माया भनेको यस्तै हुँदोरहेछ । कसैलाई पाउनु सकिँदैन भनेर थाहा हुँदाहुँदै पनि माया गरिरहिँदो रहेछ । यही होला चोखो माया भनेको पनि । हुनु त अहिलेको मानिसहरूले बिहान माया गर्छ, दिउँसो विवाह गर्छ, बेलुका छुटिन्छ । त्यस्तो माया कति ठीक, कति बेठीक त्यो बहसकै विषय होला । फेरि आजकाल माया पनि व्यावसायिक भइसकेको छ । यस्तो अवस्थामा पवित्र मायाको कुरा गर्नु पनि आफैँ पङ्गु हुनु हो ।

थुम्राहाङ : खोइ होला ता नि, त्यै भएर आजकालको जोडीहरू एकआपसमा समर्पित छैन ।

चाम्लोङमा : के गर्छौ त ? मैले पनि तिमीलाई आत्मैबाट माया गरेकै थिएँ । अहिले पनि गरिरहेकै छु र भविष्यमा पनि गरिरहने छु तर तिमीले नै मेरो मायालाई लत्याएपछि मेरो के लाग्छ र ?

थुम्राहाङ : मैले पनि त तिम्रो मायालाई लत्याएको कहाँ हो र ? तिम्रो मायालाई उच्च सम्मान गरेकै छु र

भविष्यमा पनि गरिरहने छु तर मेरो माया अन्तै हुँदाहुँदै मैले तिमीलाई कसरी माया गरौँ ? तिमी आफैँ भन त ।

चाम्लोङमा : (आक्रोशमा) लत्याएको होइन भने मेरो मायालाई किन तिरस्कार गऱ्यौ ? किन ? किन ? किन ?

थुम्राहाङ : (शान्त हुँदै) मलाई थाहा छ, तिमीले मलाई माया गर्छौ । म पनि तिमीलाई माया गर्छु तर म स्मृतिको भइसकेको मान्छे हुँ । त्यो कुरा तिमीलाई पनि थाहै छ । त्यसैले मैले तिमीलाई स्वीकारेँ भने मेरो स्मृतिलाई धोका हुन्छ । फेरि मेरो मुटुभरि स्मृतिको माया हुँदाहुँदै म तिमीलई कसरी माया गरूँ ? तिमी आफैँ भन त ।

चाम्लोङमा : (सजग गराउँदै) हो, मलाई थाहा छ । तिमीले स्मृतिलाई भुल्नु सक्दैनौ । समयअनुसार चल्नु पनि सक्दैनौ । त्यसैले तिमीले सधैँ रुएर बाँच्नु परेको छ । यस्तै हो भने अहिले मात्रै होइन, जीवनभरि तिमीले रुइरहनु पर्नेछ र मलाई पनि रुवाइरहने छौ । तिमी स्वाभिमानी छौ, अरूसँग झुक्नु जान्दैनौ । जे चिताउँछौ, त्यै गर्छौ तर सधैँ स्वाभिमानी बानी पनि राम्रो होइन । आवश्यकताअनुसार आफ्नो स्वाभिमानलाई पनि परिवर्तन गर्नु सक्नुपर्छ ।

थुम्राहाङ : तिमीले नै परिवर्तन गर । म मेरो स्वाभिमानसँग कुनै पनि कुरामा सम्झौता गर्नु सक्दिनँ । हो, मलाई थाहा छ, तिमीले मलाई माया गर्छौ तर माया के हो ? न तिमीलाई थाहा छ, न मलाई थाहा छ । यो माया भन्ने कुरा त स्वतःस्फूर्त

आउने भावना हो । सायद, त्यही मायाले होला, यो छाती भतभती पोल्दैछ । स्मृतिको मायाले होला, यो मुटु भकभकी जल्दैछ । लाखौँपल्ट स्मृतिको मायालाई निभाउनु खोजेँ तर अँहँ सकिनँ । स्मृतिको मायाले झनझन आगोझैँ यो मुटु दन्किँदैछ । उसको मायामा पागलै भइसकेको छु । यदि मैले तिम्रो मायालाई स्वीकारे भने, तिमी खुसी हुन्छौ तर मेरो स्मृतिलाई पीडा हुन्छ । ऊ विरहमा रुएको म हेर्नु सक्दिनँ । त्यसैले चाहेर पनि मैले तिम्रो मायालाई स्वीकार्नु सक्दिन । मान्छेको आत्मामा एउटा मात्रै सच्चा माया हुन्छ । सायद मेरो आत्मामा पनि स्मृतिको माया मात्रै भरिएको छ । स्मृतिको माया भरिएको छाती लिएर मैले तिमीलाई कसरी माया गरुँ ? भोलि यो मायाले मलाई सताउँछ, तिमीलाई सताउँछ । म त स्मृतिको मायामा जल्नुछ, जल्नुछ । तिमी किन मेरो मायामा जल्छौ ? किन ? किन ? किन ? (छातीमा हात राखेर पीडामा रुन्छ । पछाडिबाट कौँइचमाको प्रवेश हुन्छ । उनीले मिनिस्कट र हिल जुत्ता लगाएकी छिन् । उनीले माङ्खिममा फूलपाती चढाउँछिन् । थुम्राहाङलाई देख्छिन् ।)

कौँइचमा : (थुम्राहाङको छेउमा आएर) मामा । किन रुनु भा'को ?

थुम्राहाङ : (आँसु पुछ्दै) हैन, म रुएको छुइन ।

कौँइचमा : रुएको हैन भने किन आँसुसरि हुनु भा'को ?

थुम्राहाङ : हैन, हैन, त्यतिकै आँसु आ'को ।

कौँइचमा : कि माइजूले के गर्नु भयो ?

थुम्राहाङ : (आश्चर्य मान्दै) माइजू ?

कोँइचमा : हो, माइजू । अहिलेसम्म माइजूले केही भन्नु भा'को छैन ? कि भेटै भा'को छैन, मामा ?

थुम्राहाङ : अँहँ छैन, भाञ्जी । तै भएर त तिम्रो माइजूको मायामा म पागलै भएको छु । कयौँपल्ट आत्महत्या पनि प्रयास गरेँ तर अँहँ सकिनँ । तिम्रो माइजूको मायाले बाँचेँ तर तिम्रो माइजूले युके गएदेखि खबरै गरेको छैन । भेट हुने त कुरै छोडौँ, भाञ्जी ।

कोँइचमा : खै मामा, अरू कुरा त थाहा छैन तर माइजूको सपरिवार अस्ति नै नेपाल आउनु भा'को छ ।

थुम्राहाङ : (आश्चर्यमा) हो र भाञ्जी ?

कोँइचमा : हो, मामा । उहाँहरू पनि हामीसँगै एउटै फ्लाइटमा नेपाल आएको हो । यो कुराचाहिँ पक्का हो तर बाँकी कुरा त मलाई पनि थाहा भएन ।

थुम्राहाङ : (आश्चर्यमा) त्यसो भए म अहिले नै माइजूको घर गएँ, भाञ्जी । (थुम्राहाङ दौडिएर जान्छ ।)

कोँइचमा : हुन्छ, मामा । (थुम्राहाङ गएतिर हेर्दै) बिचरा, यो मामा पनि स्मृतिको मायामा पागलै भइसक्नु भएछ । हुनु त स्मृति मेरो साथी हो । हुनेवाला माइजू पनि तर स्मृतिले नेपाल आएको कुरासम्म मामालाई थाहै दिएन छ । मामाले स्मृतिलाई साँच्चो माया गर्दागर्दै पनि पीडैपीडा पाउँदा दुःख लाग्छ तर के गर्नु ? आइ.एल.इ.मार्फत युके गएपछि कैयौँको साथ छुट्यो, कैयौँको काख छुट्यो । कैयौँको पवित्र माया छुट्यो, कैयौँको घर परिवारै छुट्यो ।

कैयौँको घन छुट्यो, कैयौँको मन छुट्यो । ठूलो आशाको दियो लिएर युके पुगेको थियौँ तर सोचे जस्तो भएन । आफ्नो देशमा सुखले बाँचेको थियौँ तर युकेमा दुखले बाँच्नु बाध्य भयौँ । कैयौँ समय त नो वर्क नो फुड नै भयौँ । नयाँ ठाउँमा भाषाविहीन भयौँ, संस्कृतिविहीन भयौँ, पहिचानविहीन भयौँ । पछि युकेको नागरिकचाहिँ भयौँ तर हामीसँग नागरिकता मात्रै छ, हाम्रो देश छैन् । देश नहुँदाको पीडाले कैयौँलाई डिप्रेसनको सिकार नै बनायो । फलस्वरूप कयौँले आत्महत्या गऱ्यो, कैयौँ लक्ष्यविहीन भयो, कैयौँ नेपाल नै फर्कियो । यस्तो पीडाको कहानी लामो छ, भनेर भनिसक्नु छैन । मामा र स्मृतिको कहानी त एउटा प्रतिनिधि घटना मात्रै हो । यस्तो घटनाहरू कैयौँ छ, कैयौँ । त्यो भनेर साध्यै छैन ।

चाम्लोङमा : किन स्मृतिले पनि त्यस्तो गरेको होला है ?

कोँइचमा : खै, म के भनौँ र ? स्मृति धेरै इन्ट्रोभर्ट छ । उसको केही कुरा बुझ्नै सकिँदैन ।

चाम्लोङमा : तर, त्यस्तो मान्छे ता निकै खतरनाक हुन्छन् नि !

कोँइचमा : खतरनाक मात्रै कहाँ हो र ? महाखतरनाक हुन्छ नि । कहाँ, कतिखेर के निर्णय गर्छ, केही थाहै हुँदैन । अरूलाई असर पर्ने कुराको वास्तै गर्दैन । 'आफूलाई भयो भने, अरूलाई पनि भयो' भन्ने खालको हुन्छ । त्यसैले इन्ट्रोभर्ट मानिसहरूबाट सावधान हुनुपर्छ, नत्र ठूलो धोका पनि हुनसक्छ । (प्रसङ्ग बदल्दै) ए लु

गफैगफमा पो भुलिएछु । (जाँदै) अहिले जान्छु है । फेरि भरै ढिलो हुन्छ ।

चाम्लोङमा : (कौँइचमा गएतिर हेर्दै) के होला है, यो माया भन्ने कुरा पनि ? जुन मायाले धुरुधुरु रुवाउँछ, त्यही मायाको माया लागिरहने । यो कस्तो अर्मूत माया होला है ? (दर्शकहरूतिर हेर्दै) तपाईंहरू पनि यसरी नै कसैलाई माया गर्नुहुन्छ होला है ? (माङ्खिमको फुलपाती आफ्नो सिरमा सिउरिन्छिन् । माङ्खिमलाई नमस्कार गर्दै मनमनै केही सम्फिएर तिनपल्ट ढोग्छिन् । प्रकाश बिस्तारै चाम्लोङमाको अनुहारमा स्थिर भएर बिलय हुन्छ । केही मानिसहरू नृत्यको तालमा बिस्तारै आउँछन् । पछाडीको दृश्य निर्माण गरेर अघिल्लो दृश्यको सामग्रीहरू लान्छन् । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)

# आठौं दृश्य

| | | |
|---|---|---|
| स्थान | : | विवाह स्थल |
| समय | : | बेलुका |
| पात्रहरू | : | थुम्राहाङ, स्मृति, केसाङ, दुमीमा, साम्पाहाङ, हाङसयङ, सयङहरु र छिमेकीहरू । |
| घटना | : | स्मृतिको विवाह केसाङसँग हुन्छ । |

(विवाहको बाजागाजाहरू बजिरहेको छ । प्रकाश बिस्तारै रङ्गमञ्चमा प्रकट हुन्छ । शहरको बीचमा आधुनिक घर छ । घरको गेटमाथि 'स्मृति वेड्स विथ केसाङ', मिति, २५, सेप्टेम्बर, २०१२ लेखिएको ब्यानर छ । आँगनमा सप्तरङ्गी कपडाको दरबार छ । दरवारभित्र निहिङ[१] छ । निहिङको वरिपरि १००७ वटा बलिरहेको दीयो र पानी भरिएको कलशहरू छन् । कलशहरूलाई फुल र दुभोको बिर्को लगाइएको छ । निहिङको वरिपरि हाङसयङ[२]को नेतृत्वमा १०७ सयङ[३]हरूले निसुई[४] पाठ गरिरहेका छन् । सयङहरूले निसुई बस्त्रहरू लगाएका छन् । हाङसयङको बायाँपट्टि स्मृति

१. तल र माथि सात तला भएको प्रेमवादी मन्दिर । निहिङ सप्तरङ्गीबाट बनेको हुन्छ । यस निहिङमा नै हेवन्लीपाथको सर्म्पूण संस्कारहरू सम्पन्न गरिन्छ ।
२. प्रेमवादी धर्मको मुख्य धर्म गुरु ।
३. प्रेमवादी धर्मको सह-धर्म गुरु ।
४. प्रेमवादी धर्मशास्त्र ।

र दायाँपट्टि केसाङ बसिरहेका छन् । स्मृतिले रातो साडी र ब्लाउज लाएकी छिन् । केसाङले सेतो फेटा र सुट लाएको छ । स्मृतिको छेउमा दुमीमा, साम्पाहाङ, सिसु र केटी पक्षका मानिसहरू बसेका छन् । केसाङको छेउमा छेउमा दुमीमा, साम्पाहाङ, सिसु र केटी पक्षका मानिसहरू बसेका छन् । सबै जनाले विवाह पार्टीका बस्त्रहरू लगाएका छन् । स्मृति र केसाङको अगाडि थालीमा दीयो र कलशहरू छन् । चेलीसयङले बेहुलाको अगाडि बेहुलीपट्टिको दीयो र कलशहरू र माइतीसयङले बेहुलीको अगाडि बेहुलापट्टिको दीयो र कलशहरू राख्छन् ।)

हाङसयङ : (उठेर बेहुला-बेहुलीतिर इसारा गर्दै) लु तपाईंहरू अलिक अगाडि आउनुहोस् ।

सबैजना : (उठेर अगाडि सर्दै) हवस् गुरुहजुर ।

हाङसयङ : (उभिएर) हे वर-बधू । के तपाईंहरूको एकआपसलाई आत्मैबाट जीवनसाथीको रूपमा स्वीकार्नु हुन्छ ?

स्मृति/केसाङ: (छातीमा हात राखेर) हजुर, स्वीकार छौ ।

हाङसयङ : (दुवैलाई इसारा गर्दै) लु उसोभए सात वाचाअनुसार मैले निसुईमा जेजे भन्छु, त्यहीत्यही भन्नुहोस् है ।

सबैजना : (अगाडि सर्दै) हवस् गुरुहजुर ।

हाङसयङ : (निसुई वाचन गर्दै) म मेरो जीवनसाथीलाई आत्मैबाट सम्मान गर्दछु ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) म मेरो जीवनसाथीलाई आत्मैबाट सम्मान गर्दछु ।

हाङसयङ : (निसुई वाचन गर्दै) म मेरो जीवनसाथीलाई कहिल्यै पनि धोका दिने छुइन ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) म मेरो जीवनसाथीलाई कहिल्यै पनि धोका दिने छुइन ।

हाङसयङ : (निसुई वाचन गर्दै) यदि मबाट यस्तो धोका भएमा मलाई दण्ड सजाय होस् ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) यदि मबाट यस्तो धोका भएमा मलाई दण्ड सजाय होस् ।

हाङसयङ : (निसुई वाचन गर्दै) यदि मैले मेरो जीवनसाथीलाई धोका दिएमा म अन्धकारको चपेटामा फसूँ ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) यदि मैले मेरो जीवनसाथीलाई धोका दिएमा म अन्धकारको चपेटामा फसूँ ।

हाङसयङ : (निसुई वाचन गर्दै) यदि मैले असल गरेको खण्डमा म र मेरो जीवनसाथीलाई आशीर्वाद मिलोस् ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) यदि मैले असल गरेको खण्डमा म र मेरो जीवनसाथीलाई आशीर्वाद मिलोस् ।

हाङसयङ : (निसुई वाचन गर्दै) मेरो कारणले मेरो जीवनसाथीलाई राम्रो होस् ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) मेरो कारणले मेरो जीवनसाथीलाई राम्रो होस् ।

हाङसयङ : (निसुई वाचन गर्दै) हामी दुईको कारणले परिवार र समाजलाई भलो होस् ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) हामी दुईको कारणले परिवार र समाजलाई भलो होस् ।

हाङसयङ : (दुवैलाई इसारा गर्दै) हामीबाट सधैँ हाम्रो

आमाबाबुको राम्रो होस् । हामी प्रेमवादी बन्नु सकौँ, प्रेमवादी भएर जिउन सकौँ । हामीलाई सधैँ हाम्रो आमाबाबु र समाजको आशीर्वाद मिलोस् ।

स्मृति/केसाङ: (छातीमा हात राखेर) हामीबाट सधैँ हाम्रो आमाबाबुको राम्रो होस् । हामी प्रेमवादी बन्न सकौँ । प्रेमवादी भएर जिउन सकौँ । हामीलाई सधैँ हाम्रो आमाबाबु र समाजको आशीर्वाद मिलोस् ।

हाङसयङ : (निसुई वाचन गर्दै) हे माङ ! आजको यो पवित्र घडीमा जो एञ्जलहरूको शुभविवाह भइरहेको छ, उहाँहरूलाई आशीर्वाद दिनुहोस् । उहाँहरूको दाम्पत्य जीवन फूलझैँ बनोस्, सुखमय बनोस् । शान्तिमय होस्, आनन्दमय होस् । हे माङ ! हे परमप्रधान परमईश्वर ! (आकाशतिर हेर्दै) आदिम कालमा तपाईँले सबै चिजहरूको सृष्टि गर्नुभयो, पृथ्वीको पनि सृष्टि गर्नुभयो । अझै एक स्त्री र पुरुषको आदिम मातापिताको सृष्टि गर्नुभयो । उहाँहरूको सन्तानहरूको नै आज विवाह भएको हो । तपाईंले हरेक पशुपंक्षी प्राणीजगत्लाई जस्तै मानव जातिलाई पनि यो युगल जोडी बनाई सृष्टिलाई निरन्तरता दिनुपर्ने विधान बनाउनुभयो । त्यसको लागि हे पिता तपाईं हजुर धन्य हुनुहुन्छ ।

सयङहरू : (एकै स्वरमा) हे माङ ! तपाईं हजुर धन्य हुनुहुन्छ ।

हाङसयङ : (निसुई वाचन गर्दै) हे माङ ! आजको यो घडीमा यो दुई शरीर एउटै शरीर, दुई मन एउटै

मन, दुई आत्मा एउटै आत्मामा बदलिएको समय हो । त्यसैले यो पवित्र विवाहमा यो दुई जीवनहरूले एकआपसमा पवित्र आत्माले बुझ्न सकोस् । एक आपसमा रिस, राग, इच्छा, डाह, दुख, धोका दिने होइन । यो जोडीको समाजमा पवित्र जोडीको उदाहरण बन्न सकोस् । एक अर्कामा सम्मानपूर्वक कार्य होस् । अन्त्यमा सत्य प्रेम र आनन्दले जीवनको मूलमन्त्र बनोस् । सत्यले शिर उच्च होस् । स्वर्गको निर्वाणिक ढोका खुलोस् । प्रेमले चम्किलो तारामाझ आफू, आफ्नो परिवार र सारा सृष्टिलाई खुसी पुऱ्याउन सकोस् । पवित्र मायाले जीवनलाई खुसी बनाएर निर्वाणिक गहिराइमा पुग्न सकोस् । हाम्रो प्यारो एञ्जलहरूलाई परमप्रधान परमेश्वरको सदा निगाह होस् ।

सयङहरू : (एकै स्वरमा) हाम्रो प्यारो एञ्जलहरूलाई परम प्रधान परमेश्वरको सदा निगाह होस् ।

हाङसयङ : (नारा लगाउँदै) हे माङ ! हे परम प्रधान परमेश्वर, तपाईँको जय होस् ।

सबै जना : (नारा लगाउँदै) जय होस् ऽऽऽ जय होस् ऽऽऽ ।

हाङसयङ : (नारा लगाउँदै) आजको एञ्जल राजारानीको जय होस् ।

सबैजना : (नारा लगाउँदै) जय होस् ऽऽऽ जय होस् ऽऽऽ।

साम्पाहाङ : (आशीर्वाद दिँदै) ल ज्वाइँसाहेब, आजदेखि हाम्रो छोरी तपाईंलाई दियौँ । तपाईंहरूको दाम्पत्य जीवन सुखमय बितोस् । मेरो यही छ, आशीर्वाद छ ।

केसाङ : (आशीर्वाद लिँदै) थ्याङ्क यु, ड्याडी ।

साम्पाहाङ : (आशीर्वाद दिँदै) ल छोरी, आजदेखि तिमीलाई ज्वाइँको हातमा दिएको छौँ, राम्रो घर गरेर खानु । तपाईंहरूको दाम्पत्य जीवन सुखमय होस् ।

स्मृति : (आशीर्वाद लिँदै) थ्याङ्क यु ड्याडी ।

दुमीमा : (आशीर्वाद दिँदै) ल इन्जिनियर सा'ब, आजदेखि हाम्रो छोरी तपाईंको हातमा भयो । सात वाचा गरेर तपाईंलाई दिएको छौँ । तपाईंहरूको दाम्पत्य जीवन सुखमय बितोस् ।

केसाङ : (आशीर्वाद लिँदै) हवस् ममी ।

दुमीमा : (आशीर्वाद दिँदै) अनि छोरी, आजदेखि तिमी ज्वाइँको भयौँ, ज्वाइँ हाम्रो भयो । छोरीको कर्म यस्तै हो । एक न एक दिन पराइघर जानै पर्छ । म पनि पराइघरबाटै तिम्रो पापाको घरमा आएको हुँ । पराइघर नगएमा यो सृष्टि नै चल्दैन । सृष्टि चलाउनुकै लागि भए पनि पराइघर जानै पर्छ । छोरीचेलीको लागि पराइ घर जानु रहर होइन, बाध्यता हो । विकृति होइन, संस्कृति हो । कर होइन, परम्परा हो । तिमी पनि चित्त नदुखाई ज्वाइँको घर जाऊ । राम्रो घर गरेर खाऊ, सबैको मन जित । तिमीहरूको जोडी सारै मिलेको छ । ज्वाइँ इन्जिनियर हुनुहुन्छ, तिमी नर्स छौ । तिमीहरूको यो जोडी परमप्रभुले नै बनाइदिनु भएको हो । (निहिडतिर हेर्दै) ज्वाइँलाई शुद्ध कन्नेदान दिनु पाउँदा सारै खुसी छौँ ।

स्मृति : (दुमीमालाई अङ्कमाल गरेर रुँदै) ममी ऽऽऽ...( दीयो र कलश बोकेर जन्ती अगाडि बढ्छन् ।)

दुमीमा : (आँसु पुछिदिँदै) स्मृति, नरोऊ, लु नरोऊ । बिदाइको बेला रुनु हुँदैन, अशुभ हुन्छ । (दौडेर थुम्राहाङको प्रवेश हुन्छ । थुम्राहाङले सेतो सर्ट, जिन्सको खराने पेन्ट र छालाको कालो जुत्ता लगाएको छ ।)

थुम्राहाङ : (अचम्म पर्दै) स्मृति ! (स्मृतिले फर्केर हेर्छिन् । सबै मानिस अचम्म हुन्छन् । एकआपसमा हेराहेर गर्छन् । थुम्राहाङले आफ्नो छातीको गोजीबाट खैरो पोका निकालेर हेर्छ । पीडामा थुम्राहाङ रुन्छ । उसको हातबाट खैरो पोका भुइँमा खस्छ, पोका फुट्छ । पोकाबाट खैरो ब्लाउज, सिन्दुर र पोते छरपस्ट हुन्छन् ।)

स्मृति : (छक्क पर्दै) हँ ! मेरो खैरो ब्लाउज ? मेरो सिन्दुर ? मेरो पोते ? (विस्तारै खैरो ब्लाउज, सिन्दुर र पोते टिप्छिन् । अर्कोतिर फर्कन्छिन् । पीडामा रुन्छिन् । पीडाको धुन बज्न थाल्छ । खैरो ब्लाउज, सिन्दुर र पोते भुइमा झरेर छरिन्छ । छरपस्ट सामानहरू थुम्राहाङले टिपेर पीडामा रुन्छ । सबै मानिसहरू छक्क पर्छन् ।)

केसाङ : (स्मृतिको हात समाउँदै) स्मृति, जाऊँ ढिलो भइसक्यो । (केसाङले स्मृतिलाई बिस्तारै तान्छ । स्मृति केसाङसँग अगाडि बढ्छिन् । प्रकाश बिस्तारै विलयन भएर थुम्राहाङले समाएको खैरो ब्लाउज, सिन्दुर र पोतेमा स्थिर हुन्छ । सबै आवाजहरू बिस्तारै रोकिन्छ ।)



**सरुभक्त**
**(कुलपति, नेपाल संगीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठान)**

प्रवीण पुमा लामो समयदेखि नेपाली नाट्यकरितामा क्रियाशील छन् । किराती पृष्ठभूमिमा जन्मेका पुमाले यस नाटकको रचनापूर्व 'सुम्निमा' (१९९६ इ.), 'सुम्निमा पारुहाङ' (२००८ इ.), 'हेत्छाकुप्पा' (२००९ इ.), 'निनाम्मा' (२०10 इ.), 'साया' (२०१२ इ.) र 'होङ्छा' (२०१३ इ.) जस्ता नाटक सङ्ग्रहहरू प्रकाशित गरिसकेका छन् ।

प्रस्तुत नाट्यकृतिले सोझै प्राचीन किराती बिम्बहरूलाई नटिपे पनि किराती जीवनको सेरोफेरो, समकालीन जीवनको यथार्थ र विडम्बना प्रस्तुत गरेको छ । नाटकका प्रमुख परिव्याप्त पात्र नाट्यविधामा विद्यावारिधि प्राप्त, नाट्कर्मी महासंघ नेपालका सल्लाहकार थुम्राहाङ हुन् । उनको स्मृतिसित प्रेम र गोप्य विवाह हुन्छ । हिमालको पृष्ठभुमिमा आधारित यो प्रेमको कथा तव दुर्घटनामा पर्छ, जब स्मृति बेलायतमा आवासीय भिसामा बसोबास गरिरहेको परिवारमा फर्कन्छे । थुम्राहाङ उच्च बौद्धिक भए पनि भावुकतापूर्वक स्मृतिलाई पर्खिरहन्छ । त्यो अव्यावहारिकताको परिणति अन्तमा स्मृतिको केसाङसित विवाह हुँदा उसको हातमा स्मतिको स्मृतिस्वरुप खैरो ब्लाउज, सिन्दुर र पोतेमात्र स्थिर रहन्छन् ।

नेपाली समाजमा परिव्याप्त प्रवासमोह, त्यसबाट उत्पन्न विसङ्गति र अन्य मानवीय समस्यामा केन्द्रित भएर रचना भएको यस नाट्यकृतिले सरल सहज भाषाशैली, किराती शब्दावली र बिम्बका साथसाथै यथार्थोन्मुख प्रस्तुतिलाई महत्त्व दिएको छ ।

मिति : २०७४।०१।०७।



**डा. विष्णुविभु घिमिरे**
**(उप-कुलपति, नेपाल प्रज्ञा-प्रतिष्ठान)**

नाट्यकर्मी प्रवीण पुमाले नाटकको क्षेत्रमा आफ्नो बलियो पहिचान बनाइसकेका छन् । नेपाली साहित्यको वर्तमान अवस्था अध्ययन गर्दा साहित्यका अन्य विधाभन्दा नाटक विधा निक्कै पछाडि छ । अरु विधामा सिर्जना गर्नु तुलनीय रुपमा प्राविधिक र अन्य कारणले पक्कै फरक छ । त्यसैले पनि नाटक विधामा धेरै स्रष्टाले हात हाल्दैनन् । यस विधामा हात हाल्ने र नेपाली नाटकलाई विस्तार र व्यापक बनाउने उत्साहमा जुटेका हातका औंलामा गन्न सकिने थोरै नाटककारमध्ये एकजना सक्रिय नाटक स्रष्टा हुन्, प्रवीण पुमा ।

बेलायत सरकारले सन् २००४ मा आइ. एल. इ. अर्थात् 'इनडिफिनेट लिभ टु इन्टर' नीति घोषणा गऱ्यो । यस नीतिपछि ब्रिट्रिस गोर्खा परिवारले बेलायतमा बसोबास गर्ने आवासीय भिसा पाए । यसलाई गोर्खा परिवारले ठुलो अवसरका रुपमा लिए र सबैजसो बेलायत गए । कति गाउँहरू त रित्तै भए । पुस्ता-पुस्ताबाट बसोबास गर्दै आएका ती परिवारहरूको बेलायत प्रस्थानसँगसँगै नेपालका धेरै गाउँघर शून्य भए । उनीहरूको प्रस्थानसँगै यहाँको संस्कृति, परम्परा, सम्बन्ध, ज्ञान, सिप सबै पक्षमा विचलन आयो । यही भावनात्मक प्रभावलाई बडो संवेदनापूर्वक पुमाले यस नाटकमा प्रस्तुति दिएका छन् । किराती संस्कृतिको मिथक र बिम्बको प्रयोगले नाटक जीवन्त भएको छ । यसरी नै स्थानीय बोलचालको भाषाको प्रयोग, विषयवस्तुको स्वाभाविक प्रस्तुतिले यो नाटक एउटा फरक चेतनाको नाटक पनि भएको छ ।    मिति : २०७३।०९।०३।

**डा. कविता लामा**
**सिक्किम विश्वविद्यालय, भारत ।**



नाट्यकर्मी प्रवीण पुमाको स्मृति नाट्यकृतिले यसचोटी नेपाल र युकेको सामाजिक परिवेशलाई नाटकमा भित्र्याएको छ । नाटककारको मूल उद्देश्य हो नेपालबाट युके गएका नेपालीहरूले आफ्नो परिवार, संस्कृति, भाषा, समाज भुल्नका साथै आफ्नो देशप्रति माया र श्रद्धा नगरेको तिक्त यथार्थलाई नाट्य रूपबाट अभिव्यक्त गर्नु र त्यस विषयलाई नेपाली समाजसामु ल्याउनु ।

यस स्मृति नाटकमा मूल नायक थुम्राहाङ अनि नायिका स्मृतिको असफल प्रेमको कथा छ । प्रेम असफल रहनाका कारणहरू भौगोलिक दूरी, अमिल्दो पारिवारिक पृष्ठभूमि, भिन्न सामाजिक बनोट अनि त्यस समाजअनुरूपको मनोस्थिति केही पनि हुनसक्छ । त्यसैको प्रभावस्वरूप यस नाटकमा किराती संस्कृतिको पूर्ण रूपले चित्रण रहनाका साथै रोमान्स, खुसी, दु:ख, पीडा, आशा, निराशा, मिलन, बिछोड, द्वन्द्व, समवेदना, एक तर्फी प्रेम सबै तत्त्वहरूको मिठो सममिश्रण पाइन्छ ।

यस नाटकले समसामयिक मुद्दालाई अघि लाएको छ । सुखद प्रेममय दृश्यबाट थालिएको नाटकको अन्त अश्रुपूर्ण, भावपूर्ण अनि बिछोडको पीडाले दर्शकलाई निकै रुवाउने छ । नारी सशक्तिकृत रहेको समाजको चित्रण चाम्लोङमाले थुम्राहाङ सामु प्रेम प्रस्ताव राख्ने आँट गरेको देखाउनु हो । समाज शिक्षित छ तर सचेत छैन भन्ने सोचलाई पुमाले नाटकमाथि पिएचडी गरिसकेको थुम्राहाङलाई संस्थाले सम्मान गर्ने सुसमाचारलाई समाजमा एउटा राम्रो प्रथाको स्थापना गर्नेप्रति संकेत गरेको बुझिन्छ । नाटकमा प्रेम गर्नेहरू इमानदार रहे पनि सफल प्रेमको खोजीमा छन् ।

# स्मृति नाटकका खोटहरू

-रक्ष राई



नाट्यकर्मी प्रवीण पुमाको नवीनतम नाट्यकृति हो, 'स्मृति' । पुमाका अधिकांश नाटकहरूमा आदिवासीवाद पाइन्छ । यो कार्य सह्रानीय छ । तर पुमाको यस कार्यप्रति नेपाली वाङ्मय मौन छ । यो मौनता नेपाली वाङ्मयको पुरातन चिन्तन हो । सङ्कीर्ण सोच हो । यस्तो चिन्तनमा पुमाको नाट्य सिर्जना दोस्रो दर्जाको हो । यस पटक झन् पुमाले तेस्रो दर्जाको समाज र चरित्रलाई नाट्य विषय बनाएका छन् । यसले लाहुरे समाज र त्यसको प्रतिनिधि पात्र स्मृतिलाई प्रतिनिधित्व गरेको छ । यस नाट्यकृतिको पनि नेपाली वाङ्मयमा के हबिगत हुने हो, यहीबाट आँकलन गर्न सकिन्छ । लाहुरे समाज, परम्परा र संस्कृति नेपाली भाषा र वाङ्मयकै समकालीन हो । नेपाली साहित्यमा लाहुरे समाज, परम्परा र संस्कृतिको लेखन शून्य छ । जे जति लेखिए, तिनलाई अत्यन्त नकारात्मक पक्षबाट दुई ढङ्गले प्रस्तुत गरिएका छन् ।

पहिलो प्रस्तुति लाहुरे दयामाया विहीन, भावनाहीन, रुखो स्वभाव, निर्दयी र हिंस्रक चरित्र चित्रण । दोस्रो अशिक्षित, पटमूर्ख, बुद्धि, विवेकहीन, निरीह दयाका पात्र । यो लाहुरेलाई हेर्ने नेपाली दृष्टिको पहिलो जग हो । जग नै गलत भएपछि घरको संरचना र सौन्दर्य नै कुरुप हुनु स्वाभाविकै हो । लाहुरे शुभचिन्तकहरूबाट लाहुरे जीवन लेखिँदा लाहुरेको सुन्दर पक्ष छेलिनु र कुरुप पक्ष नै प्रकाशित हुनु भनेको नेपाली

मनोविज्ञानको पहिलो जग नै कुरुप हुनुले हो । यो गल्ती नेपाली साहित्यमा जबजब लाहुरे जीवन लेखिन्छ, तबतब दोहोरिने गर्दछ । यो गल्ती प्रतिष्ठित लेखकहरूद्वारा पनि दोहोरिएको छ । यसो हुनमा लेखक द्रष्टास्रष्टा हुनु हो, भोक्तास्रष्टा नहुनु हो । अब नेपाली मनोविज्ञानको कुरुप जग बदल्न भोक्ता स्वयम् पनि स्रष्टा हुनु पर्छ । यो आग्रह युद्ध साहित्य सिद्धान्तमा गरिएको छ ।

यस स्मृति नाट्यकृतिमा पनि त्यही दोष दोहोरिएको छ । यद्यपि यो दोष पुमाको एकल होइन, यो नेपाली मानसको कुरुप मनोविज्ञानको प्रभावको प्रतिफल हो । पुमा लाहुरे परिवारकै सदस्य हुन् । पुमाको नाट्यध्येय पनि लाहुरे समाज पलायनले हुने राष्ट्रिय क्षतिको आँकलनलाई प्रकाश पार्न' हो । तर नाट्यसृजनामा लाहुरे प्रतिनिधि पात्र स्मृतिको चरित्रमा पुरानै मनोविज्ञानको नयाँ संस्करण आएको छ । तथापि यस मनोविज्ञानको निरन्तर संस्करण पुमा एकलको आविष्कार होइन । कारण लाहुरे पलायन हुँदा नागरिक सँगसँगै उसको भाषा, संस्कृति, धर्म र पुँजी पनि पलायन हुँदा हुने राष्ट्रिय क्षतिको बारे राज्यलाई सचेत गराउनु स्मृति नाटकको ध्येय हो । नाटकको ध्येय सुन्दर छ । तर लाहुरे पनि देशको नागरिक हो, अनागरिक होइन । नागरिक देशको राष्ट्रिय निधि हो । नागरिकको पलायनले राष्ट्र खोक्रो हुन्छ । यही नागरिक निधि नाटकमा समावेश छ । यो सबल पक्ष हो । तर स्मृतिको विदेश पलायनको पक्ष मात्र यस नाटकमा प्रकाशमा आएको छ । यो लाहुरे पलायनको पुरानो मानसिकता हो ।

यस स्मृति नाटकमा आठ दृश्यहरू छन् । नाटकको पहिलो दृश्यमा थुम्राहाङ र स्मृतिको संयोग छ । ती नाटकीय भङ्गीमा प्रेमालाप गर्छन्, प्रेमक्रीडा गर्छन् । सुन्दर भविष्यका कल्पना गर्छन् । यो स्थान देवभूमि छ । दोस्रो दृश्यमा त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलबाट बिदा लिएर स्मृति बेलायत जान्छिन् । उड्नका लागि तयार हुन्छे । थुम्राहाङ आफ्नी प्रेमिकालाई

विक्षिप्त हृदयले बिदाइ गर्न तयार हुन्छ । ती प्रेम वियोगले विक्षिप्त हृदय लिएर बिदा हुन्छन् । र स्मृति बेलायत उड्छे र थुम्राहाङ घर फर्किन्छ । तेस्रो दृश्यमा चाम्लोङमाले थुम्राहाङलाई एकपक्ष प्रेम गर्छे । थुम्राहाङले  स्मृतिलाई माया गर्छ । तर स्मृति अर्कैकी हुन्छे । यसरी त्रिकोणात्मक प्रेमको प्रदर्शनलाई नाटकमा प्रस्तुत गरिएको छ ।

चौथो दृश्यदेखि सातौँ दृश्यसम्म स्मृतिबाट छुट्टिएको एक्लोपनमा थुम्राहाङको मानसिक विक्षिप्तपनलाई प्रस्तुत गरिएको छ । र, अन्तिम आठौँ दृश्यमा विवाह मण्डपमा स्मृतिको प्रवेश गराइएको छ । अर्थात् बेलायतबाट नेपाल अवतरण गराइएको छ । थुम्राहाङलाई प्रेम गर्ने स्मृति बेलायत पुगेर आजको अत्याधुनिक युगको विज्ञान र प्रविधिले सुगम र सुलभ बनाइदिएको सूचना, सञ्चार र साइबर सुविधाको सदुपयोग नगरिकन आफ्नो प्रेमीबाट सम्पर्कविहीन हुन पुगेकी स्मृतिको अर्कै रुपलाई प्रस्तुत गरिएको छ । त्यो दृश्यमा उनको अर्को पुरुष केसाङसँग विधिवत विवाहको कर्मकाण्डको अन्तिम क्षणलाई देखाइएको छ र त्यहाँ स्मृतिको प्रेम बिछोडले विक्षिप्त थुम्राहाङको प्रवेश गराइएको छ र नाटकको अन्त गरिएको छ ।

यो स्मृति नाटक वियोगान्त नाटक हो । वियोगी पात्र थुम्राहाङको मानसिक विक्षेपले भावुक बनाउँछ । यो विचारको रूढताले दिमाग खट्टो बनाउने भन्दा भावनाले हृदय स्पर्श गर्ने नाटक बनेको छ । नाटकको कथा संवादको माध्यमबाट अगाडि बढ्दै जाने र पूर्ण हुने विषय हो । यसर्थ नाटकको संवादको बान्की सटीक, सुन्दर, कलात्मक र प्रभावी हुन आवश्यक हुन्छ । यस नाटकको संवादको बान्की सटीक र मर्मस्पर्शी छन् । कतै पनि झर्को लाग्दा लम्बेतान संवादहरू छैनन् । अतः यो नाटक पाठकका लागिभन्दा पनि प्रेक्षकका लागि प्रक्षेपण हेतु निर्माण गरिएको हो । यो भावनात्मक संवेगले निर्माण भएको नाटक

आफैमा सुन्दर भए तापनि थोरै खोट र त्रुटिहरू पनि छन् । यस नाटकको कथाको बहुपक्षीय आयामलाई ध्यान नदिईकन एक पक्षीयतातर्फ मात्र गरिएको छ । त्यो पहिलो खोट स्रष्टाको भन्दा पनि यो नाटक लेखनको समय या परिस्थितिको हो । यहाँ लाहुरे जीवनको बहुपक्ष अन्धाकारमा परेर एकपक्ष मात्र प्रकाशनमा आएको छ । यसो हुनुको पहिलो कमजोरीको कारण नाटककार द्रष्टा मात्र हुनु तर भोक्ता नहुनु हो । कारण भोक्ताले जीवन बहुपक्षबाट भोग्छ र उसको लागि त्यो अनुभव प्रत्यक्ष हुन्छ, तर द्रष्टाका लागि त्यो अनुभूति एकपक्ष र परोक्ष हुन्छ । यस नाटकको पहिलो कमजोरी नै यही हो ।

नाटकमा प्रेक्षकलाई सन्देश प्रक्षेपण गरिँदा नाटककार नाटक लेखनको हेतु पूरा गर्न स्मृतिले सबल पात्रको रुपमा आउन वञ्चित हुनपर्‍यो । नाटकको तानाबानालाई नाटककारले अर्कै तरिकाले बुनेर प्रेक्षकलाई सन्देश प्रक्षेपण गर्ने जुक्ति अपनाउनु पर्दा ‘स्मृति खलपात्रको रुपमा रुपान्तरित हुन पुगिन् र फेरि पनि लाहुरे पलायन, कमजोर र नकारात्मक पात्रकै रुप प्रस्तुत हुन पुग्यो । यदि यस नाटकको स्रष्टा स्वयम् भोक्ता हुने थियो भने ‘स्मृति सबल र सुपात्रको रुपमा प्रस्तुत हुन पाउँथिन् । आफ्नो प्रेमीलाई नेपालमा छाडेर आएकी स्मृतिको जीवनको भोगाइको बहुपक्षको उसलाई ज्ञान हुने थियो । यदि यस नाटकको स्रष्टा भोक्ता भइदिएको भए बेलायतमा आप्रवासीहरूका सङ्ख्या दिनानुदिन बढेपछि बेलायतले लगातार आश्रित भिसामा कडाइ गर्दै लगेर हरेक महिना नियम र कानुनको अग्लाअग्ला पर्खालहरू खडा गर्दै लगेको र विभिन्न व्यवधान र अड्चनहरू थप्दै लगेर ती दुई प्रेमी प्रेमिकाको भावनात्मक विच्छेद गराइएको दृश्य निर्माण गरेर ‘स्मृतिलाई सबल र सुपात्रको रुपमा स्थापित गराउन सकिन्थ्यो र त्यही वास्तविकता हो, तर स्रष्टा भोक्ता नहुनाले त्यसो भएन ।

दोस्रो खोट हो, अवास्ताविकता र अस्वाभाविकता माथि बेवास्ता गर्नु । यो नवचेतनाग्रह हो । यो नवचेतनाग्रह हो । यो सृजना स्रष्टाको कलात्मक प्रत्यायीकरण हो । यसमा स्रष्टाको काल्पनिकताको अवास्तविकता, अस्वाभाविकता र अव्यावहारिकतालाई भाषाको खेलले कलात्मक प्रत्यायीकरण गरिनु हो । यस नाटकमा काल्पनिकताको अस्वाभाविकता र अव्याहारिकता नाटकको घटनाक्रममा खड्किन्छ ।

पहिलो दृश्यमै स्मृतिको प्रेमक्रीडा र भावभङ्गी, मन्दिरमा भगवानलाई साक्षी राखेर गरिने गोप्य विवाह, जसलाई गन्दर्भ विवाह भनिन्छ, त्यसलाई सार्वजनकीकरण गरिनु र घरपरिवारमा त्यसलाई सरलीकरण र व्यावहारिक बनाउन खोज्नु, नाटक विधामा विद्यावारिधि प्राप्त शिक्षित र बौद्धिक पात्र थुम्राहाङलाई स्मृतिको प्रेममा विक्षिप्त देखाइनु, थुम्राहाङलाई प्रेम गर्ने स्मृतिको प्रेममा बिनाकारण नाटकीय परिवर्तन हुनु, किराती संस्कृतिमा वैवाहिक कर्मकाण्डमा इसाई धर्मको गिर्जाघरमा सम्पन्न गरिने वैवाहिक कर्मकाण्डलाई गड एञ्जल प्रेमवादीले गर्दै आएको अनुकरणलाई स्मृति र केसाङको विवाहको कर्मकाण्डमा देखाइनु जस्ता नाटककारका काल्पनिकताका केही अस्वाभाविकतालाई सृजनात्मक प्रत्यायीकरण नगरिँदा नाटकका घटनाक्रमका स्वाभाविकतामा थोरै अर्घेला, चोसोमोसो र खोंडेपनहरू देखा पर्दछन् । अन्यथा यो नाटक सुन्दर र नेपाली नाटकमा मौलिक रुपरङ्गले परिष्कृत उत्कृष्ट बन्न सफल भएको छ ।

यस स्मृति नाट्यकृतिको आयमिकता र बहुलपक्षका बारे विमर्श गर्न सकिने प्रसस्त ठाउँहरू छन् । विशेष गरिकन आदिवासी सौन्दर्यशास्त्रसँग निकटता राख्छ । किराती संस्कृति, मुन्दुम, मिथक र लोककथाका पात्रहरूबाट ल्याइएका पात्रहरूको प्रयोग भौगोलिकता र प्राकृतिक बछ्टाहरूलाई पृष्ठभूमिमा देखाइएका छन् । लाहुरे दर्शनबाट पनि प्रभावित छ । मूलतः

यो लाहुरे जीवनलाई हेर्ने मुलधारको दृष्टान्तको पहिलो आँखाको रुपमा आएको छ । लाहुरे जीवनमाथि द्रष्टाका तर्फबाट लेखिएको पहिलो कृति हो । यस नाटकमा लाहुरे जीवनको सकारात्मक पक्ष प्रकाशमा आउन नसके पनि द्रष्टाका तर्फबाट लाहुरे जीवनमाथि लेख्ने पहिलो प्रयत्नको सराहना गर्नु पर्दछ । यस प्रयत्नको प्रसंशा गर्दछु ।

बेलायत, १९ जुन २०१६

# स्मृति नाटकमा सांस्कृतिक कला

-प्रा. डा. खगेन्द्रप्रसाद लुइटेल



जगतबहादुर र चतुरकुमारी राईको कान्छा छोराका रूपमा २०३५ साल चैत्र १२ गते नेपालको सगरमाथा अञ्चलमा पर्ने खोटाङ जिल्लाको चिसापानी-७ मा जन्मिएका परशुराम राई हाल बागमती अञ्चलको ललितपुर-१४ ताल्छिखेलमा बसोबास गर्छन् । अङ्ग्रेजी विषयमा एम.फिल.सम्मको अध्ययन गरेका उच्चशिक्षित व्यक्तित्व राईले नाट्याभिनयका साथै विभिन्न क्षेत्रमा विशेष तालिम पनि लिएका छन् । यिनले नेपाली साहित्यको विशेषत: नाटकका क्षेत्रमा प्रवीण पुमाका नामबाट आफ्नो पहिचान बनाइरहेका छन् ।

नाटक लेखन, निर्देशन र अभिनयमा रुचि राख्ने पुमाले थुप्रै नाटक लेखनका साथै निर्देशन र अभिनयसमेत गरेका छन् । स्थानीय, क्षेत्रीय, राष्ट्रिय र अन्तर्राष्ट्रिय स्तरमा समेत नाटक प्रदर्शन गरेर यिनले नेपाली नाटकका क्षेत्रमा आफ्नो पहिचान विस्तार गरिरहेका छन् । रेडियो नाटकमा समेत अभिनय गरेका पुमाले विभिन्न चलचित्र लेखन, निर्देशन र अभिनय पनि गरेको देखिन्छ । यिनले अभिनय प्रशिक्षकका रूपमा समेत कार्य गरेका छन् । यिनले सुम्निमा (साप्ताहिक, सन् २००३), पुमा (मासिक, सन् २००३), सिलौटी टाइम्स (मासिक, सन् २००५-२०१०), यायोक्खा (स्मारिका, सन् २००९), खम्बुवान पत्र (मासिक, सन् २०१०-२०१२), जुपिटर टोल (स्मारिका,

सन् २०१६-२०१८) आदिको सम्पादन पनि गरेका छन् । त्यस्तै पुमाद्धारा निमार्ण, निर्देशन, प्रस्तुत गरिएको रङ्गमञ्च टिभी कार्यक्रमले इण्डिजिनियस टिभी र आई टिभीमा सन् २०१७ देखि अहिलेसम्म १३३ औं श्रृंखाला पार गरिसकेको छ ।

प्रवीण पुमाले नव प्रभात कलेजमा (सन् २०१३-२०१८सम्म), वानेश्वर क्याम्पसमा (सन् २०१५-२०१९सम्म), सिनास क्याम्पसमा (सन् २०१८ देखि हालसम्म) प्राध्यापन गरिसकेका छन् । पुमाले यस सिनास क्याम्पसमा क्याम्पस प्रमूख (सन् २०१८-२०२३) भएर कुशल नेतृत्व पनि गरेको छ ।

अष्ट्रियाको भियना विश्वविद्यालय, नेपाल सरकारको नेपाल प्रज्ञा प्रतिष्ठान र त्रिभुवन विश्वविद्यालयलगायत विभिन्न संस्थाहरूबाट अनुसन्धान कार्य सम्पन्न गरेका पुमा नेपाल सरकारको नेपाल सङ्गीत तथा नाट्य प्रज्ञा प्रतिष्ठान, सांस्कृतिक संस्थान र पोखरा विश्वविद्यालयमा पनि अनुसन्धान कार्यमा संलग्न छन् । यिनी सुम्निमा थिएटर एकेडेमी र नाट्यकर्मी महासङ्घ नेपाललगायत थुप्रै सङ्घसंस्थामा पनि आबद्ध छन् ।

यसरी नाटक लेखन, निर्देशन, अभिनयका साथै विभिन्न पत्रपत्रिकाको सम्पादन र अनुसन्धानका क्षेत्रमा समेत क्रियाशील पुमाका हालसम्म निम्नलिखित नाट्यकृतिहरू प्रकाशित छन् :

१. सुम्निमा (नाटकसङ्ग्रह, सन् १९९६)
२. सुम्निमा-पारुहोङ (नाटकसङ्ग्रह, सन् २००८)
३. हेत्छाकुप्पा (नाटक, सन् २००९)
४. निनाम्मा (नाटकसङ्ग्रह, सन् २०१०)
५. साया (नाटकसङ्ग्रह, सन् २०१२)
६. होङछा (नाटकसङ्ग्रह, सन् २०१३)

यी नाट्यकृतिहरूबाहेक प्रवीण पुमाका विभिन्न विषयसँग सम्बद्ध निम्नलिखित कृतिहरू पनि प्रकाशित छन् :

१. हेन्खामा-निनाम्मा (मिथकसङ्ग्रह, सन् १९९७)

२. मुन्दुमः दोङवाङ-दोङदापा (मुन्दुम, सन् २००४)
३. सुम्निमा (चलचित्र, लेखन/अभिनय : सन् २००७)
४. बुढाहोङ मुन्दुम : परिचय, पाठ र विश्लेषण (सन् २०१५)
५. पारूसेवा मुन्दुम : परिचय, पाठ र विश्लेषण (सन् २०१७)

उल्लिखित थुप्रै कृतिहरू प्रकाशन गरिसकेका प्रवीण पुमाले सर्वोत्कृष्ट अभिनेता (सन् १९९८), सर्वोत्कृष्ट निर्देशक (सन् १९९९), उत्कृष्ट नाट्य प्रस्तुति तेस्रो स्थान (सन् २००२), उत्कृष्ट नवप्रतिभा सम्मान (सन् २००३), उत्कृष्ट नाट्य प्रस्तुति पुरस्कार (सन् २००६), सर्वोत्कृष्ट सांस्कृतिक राष्ट्रिय सम्मान-२०१२, नेपाल सरकार, सुचना तथा सञ्चार मन्त्रालयको चलचित्र विकाश बोर्ड), उत्कृष्ट नाट्य प्रस्तुति पुरस्कार (सन् २०१५), प्रतिभा पुरस्कार-२०१७ (नेपाल सरकार, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय), सर्वोत्कृष्ट चलचित्र लेखक-२०१७ (आदिवासी चलचित्र महोत्सव-२०१७, अमेरिका), जुपिटर नाट्य सम्मान-२०१७ (जुपिटर टोल सुधार समिति, ललितपुर), भिमु नाट्य सम्मान-२०१८ (भिमु मेमोरियल ट्रष्ट, काठमाण्डौ) जस्ता विभिन्न सम्मान र पुरस्कार पनि प्राप्त गरिसकेका छन् । यसरी विशेषतः नाटकका क्षेत्रमा क्रियाशील रही कम उमेरमै यस क्षेत्रमा आफ्नो पहिचान बनाइसकेका प्रवीण पुमाको स्मृति नामक नाटक प्रकाशन भएको छ ।

स्मृतिजस्ता धेरै पात्रहरूलाई समर्पण गरिएको प्रवीण पुमाको स्मृति नामक नाटकको सुरुमा प्रकाशकीयको लगत्तैपछि पात्रहरूको परिचय र त्यसपछि क्रमश : नाट्य सारांश, नक्साङ्कनमा नाट्य सारांश र संवाद सारांश दिइएको छ । ३१६ वटा संवाद भएको यस नाटकमा सबभन्दा बढी संवाद थुम्राहाङको ११७ र सबभन्दा कम संवाद केसाङको १२ रहेका छन् ।

यस नाटकको प्रमुख नायक थुम्राहाङ सबै दृश्यमा

देखापरेको छ भने नायिका स्मृति पहिलो, दोस्रो र आठौँ दृश्यमा देखापरेकी छे । स्मृतिको पछिल्लो पति केसाङलगायत कतिपय पात्रहरू अन्तिम दृश्यमा मात्र देखापरेका छन् । बिछोड हुने क्षणबाट सुरु गरिएको यस नाटकको अन्त्य पनि बिछोडमै भएको छ । प्रायः छोटाछोटा आठ दृश्यमा विस्तारित यस नाटकका सबै दृश्यको सुरुमै स्थान, समय र पात्रहरूको विवरण दिई मञ्चनिर्देशसमेत गरिएको छ । यस नाटकको दृश्ययोजना र मूल घटनासन्दर्भ यसप्रकार रहेको छ :

- **पहिलो दृश्य** :

नारी सहभागी स्मृति र पुरुष सहभागी थुम्राहाङका बीचमा भएका मायाप्रेमका कुरा र बिछोडिने बेलाका पीडाको अभिव्यक्ति,

- **दोस्रो दृश्य** :

त्रिभुवन विमानस्थलबाट वेलायततर्फ प्रस्थान गर्ने बेलामा स्मृति र थुम्राहाङ दुवैको रुवाबासी,

- **तेस्रो दृश्य** :

चाम्लोङमा नाम गरेकी केटीबाट थुम्राहाङलाई प्रेमप्रस्ताव र उसबाट अस्वीकार,

- **चौथो दृश्य** :

थुम्राहाङबाट स्मृति सम्पर्कविहीन भएकाले भावविहिल भएर आत्महत्यासम्मको प्रयास गरेका घटनाको वर्णन र बाहिङमाले यथार्थमूलक ढङ्गमा थुम्राहाङलाई सम्झाएको प्रसङ्ग,

- **पाँचौँ दृश्य** :

स्मृति र थुम्राहाङले माङ्खिममा गएर सुटुक्क बिहे गरेका घटनाको स्मरण, स्मृति अर्कैतिर लागेको सन्दर्भ बताउँदै याम्फुहाङले थुम्राहाङलाई बिहे गर्ने सल्लाह प्रदान र ऊबाट अस्वीकार,

- **छैटौं दृश्य** :

थुम्राहाङले स्मृतिको फोटो अगाडि राखेर रुँदै उसको जन्मदिन मनाएको प्रसङ्ग वर्णन र जन्मोत्सव मनाउन आएकी बाहिङमालाई देखेर आमाबाट शङ्का र आक्रोश व्यक्त,

- **सातौं दृश्य** :

चाम्लोङमाबाट थुम्राहाङसँग पुनः मायाप्रेमका कुरा दोहोऱ्याउँदै स्मृति बिहे गर्न नेपाल आएको कुरा अभिव्यक्त,

- **आठौं दृश्य** :

विधिविधानअनुसार स्मृति र केसाङको विवाह भएको र त्यही ठाउँमा थुम्राहाङ पुगेर भावविहिल भई रोएको प्रसङ्ग ।

माथि प्रस्तुत गरिएको विवरणलाई हेर्दा यस नाटकको कथावस्तु उति धेरै लामो नभए पनि परिपूर्ण रहेको देखिन्छ । यसको कथानक आदि, मध्य र अन्त्यका क्रममा क्रमिक ढङ्गले विन्यस्त छ । नेपाली साहित्यको विभिन्न विधाका अधिकांश कृतिमा पुरुषले नारीलाई धोका दिएको प्रसङ्ग वर्णन पाइन्छ भने यस नाटकमा त्यसको ठीक विपरीत नारीले पुरुषलाई धोका दिएको प्रसङ्ग  वर्णन यथार्थमूलक ढङ्गले स्वाभाविक रूपमा गरिएको छ ।

यस नाटकमा सहभागीहरूको सङ्ख्या पनि त्यति धेरै छैन । यसमा स्मृति, आमा, बोन्तावामा, चाम्लोङमा, बाहिङमा, कोँइचमा, दुमीमा आदि नारी सहभागी छन् भने थुम्राहाङ, खलिहाङ, याम्फुहाङ, याक्थुङ्बा, साम्पाहाङ, केसाङ आदि पुरुष सहभागी हुन् । यसमा प्रयुक्त सहभागीहरूमध्ये प्रेममा धोका दिने स्मृतिबाहेक अरू सबैजसो सत्पात्रका रूपमा रहेका छन् । यस नाटकको नायक थुम्राहाङ पिएच. डी. गरेको उच्चशिक्षित व्यक्ति भएर पनि निकै कमजोर मानसिकताको छ भने अन्य सहभागी सामान्य खालका छन् ।

उच्चशिक्षित व्यक्ति थुम्राहाङ अत्यन्त मायालु व्यक्तिका

रूपमा देखापर्छ भने स्मृति प्रेमको बेवास्ता गर्ने सुखसुविधाभोगी व्यक्तिका रूपमा देखापर्छे । सुरुमा स्मृति र थुम्राहाङका बीचमा अगाध प्रेम देखिए पनि अन्त्यमा स्मृतिले केसाङसँग बिहे गर्नुले उसको प्रेम कामवासना र सुखसुविधामै केन्द्रित भएको देखिन्छ । यसमा थुम्राहाङले स्मृतिलाई सदैव गरेको प्रेम र सम्झना यथार्थमूलकभन्दा बढी भावुक प्रकारको छ भने चाम्लोङमाले थुम्राहाङप्रति दर्साएको एकोहोरो प्रेम र त्यसको अभिव्यक्ति अलि बढी भावुक खालको देखिए पनि स्वाभाविक र यथार्थमूलक नै रहेको छ ।

यस नाटकमा द्वन्द्वको प्रयोग सहज ढङ्गमा गरिएको छ । नाटकका प्रमुख सहभागी थुम्राहाङमा आन्तरिक द्वन्द्वको प्रबलता देखिन्छ भने अन्य सहभागीमा बाह्य द्वन्द्व पनि प्रकट भएको छ । यसमा प्रयुक्त धेरजसो सहभागीका नाम किराती जातिसँग सम्बद्ध रहेको हुँदा नेपाली जनजीवनमा प्रचलितभन्दा अलि भिन्न भएकाले किराती जाति र संस्कृतिका बारेमा जानकारी नभएका वा कम जानकारी भएका व्यक्तिलाई पात्रको परिचय नहेरी ती नारी वा पुरुष के हुन् भनी छुट्ट्याउन भने गारो हुन्छ ।

परिवेशका दृष्टिले हेर्दा नेपालदेखि वेलायतसम्मको स्थानको वर्णन पाइने यस नाटकको वातावरण आद्योपान्त दुखद छ । नेपालमा रहँदा थुम्राहाङसँग माङ्खिममा गएर कसैले थाहा नपाउने गरी सुटुक्क विवाह गरिसकेकी स्मृति वेलायत पुगेको केही समयपछि नै आफ्नो पतिलाई बिर्सेर अर्कै केटासँग लाग्नु र नेपालमै आएर उसँग विवाह गर्नु, यता चाम्लोङमाले थुम्राहाङसँग पटकपटक प्रेम प्रस्ताव राख्दा पनि स्मृतिको सम्झनामा त्यसलाई अस्वीकार गर्नुजस्ता घटनाले नारीहरू भरोसालायक हुन्नन् भन्ने कुरा पुष्टि गर्दछ । उच्चशिक्षित पात्रहरूका बीचमा भएको यसप्रकारका क्रियाकलापलाई हेर्दा पुरुषले नारीलाई धोका दिन्छन् भन्ने नेपाली समाजमा विद्यमान सन्दर्भभन्दा भिन्न घटना

वर्णन गरिएको यस नाटकमा प्रेमलाई माध्यम बनाएर नारी मनोविज्ञानको चित्रण गरिएको छ ।

प्रेम र जीवनमा पुरुषहरू मात्र होइन नारीहरू पनि अविश्वसनीय र दुष्ट हुन्छन् भन्ने यथार्थको प्रकटीकरण गर्ने उद्देश्यद्धारा अभिप्रेरित यो नाटक तृतीय पुरुष दृष्टिबिन्दुमा संरचित छ । अशिक्षित मात्र होइन शिक्षित पनि अनि पुरुष मात्र होइन नारी पनि धोकेबाज हुन्छन् भन्ने स्पष्ट विचार यस नाटकमा अभिव्यञ्जित भए पनि यो कुनै राजनीतिक वादसँग भने सम्बद्ध छैन ।

प्रायः शुद्ध भाषाको प्रयोग पाइने यस नाटकमा प्रयुक्त नेपाली भाषा ठाउँठाउँ मानकको निकट र ठाउँठाउँ किराती जातिले बोल्ने नेपाली भाषाका ढाँचाको रहेको छ । लिङ्ग भेदरहित कथ्य भाषाको आधिक्य पाइने यस नाटकमा मञ्चनिर्देशमा भने मानक नेपाली भाषाको प्रयोग गरिएको छ । यस नाटकमा प्रयुक्त संवादमा अङ्ग्रेजी शब्द र वाक्यको पनि प्रयोग पाइन्छ । यसका प्रमुख सहभागीहरू उच्चशिक्षित भएकाले यसलाई त्यति अस्वाभाविक मान्नसकिन्न । किरात धर्म र संस्कृतिसँग अपरिचित व्यक्तिका लागि यसमा प्रयोग गरिएका कतिपय भाषिक सन्दर्भ अबोधगम्य भए पनि तिनलाई सङ्ख्याङ्कनका साथ पाददटिप्पणीमा अर्थ्याइएको हुँदा त्यो अर्थ हेरिसकेपछि चाहिँ सहज बोधगम्य लाग्छ ।

मञ्चनका दृष्टिले हेर्दा यो नाटक सहज मञ्चनीय छ । दृश्ययोजना तथा आङ्गिक, वाचिक, सात्त्विक र आहार्यजस्ता अभिनयशिल्पका दृष्टिकोणबाट हेर्दा यस नाटकको मञ्चनमा खासै जटिलता देखिन्न । अझ हरेक दृश्यको सुरुमै स्पष्ट मञ्चनिर्देश गरिएको र अन्त्यमा प्रकाश व्यवस्थापनको समेत उल्लेख गरिएको अनि सबै दृश्यहरू प्रायः छोटाछोटै भएकाले यो नाटक मञ्चन गर्न सकिने खालको देखिन्छ ।

प्रमुख नारी सहभागी स्मृतिका नामबाट राखिएको यस नाटकको शीर्षक सामञ्जस्यमूलक र सार्थक छ । किराती संस्कृतिसँग सम्बद्ध विषयवस्तुमा केन्द्रित रही सहज मञ्चनीय नाटकको सिर्जना गर्न प्रवीण पुमा निकै प्रवीण भइसकेको देखिन्छ ।

अन्तयमा, प्राय: किराती बिम्ब, प्रतीक र मिथकको प्रयोग गरी नाटक लेख्न रुचाउने पुमाको नाट्य सिर्जना किरात धर्मसंस्कृतिसँग अपरिचित व्यक्तिहरूका लागि केही जटिल र सहज रूपमा अपठनीय देखिए पनि नेपाली साहित्यमा यस प्रकारका नाटकको न्यूनता रहेका सन्दर्भमा किरात धर्म र संस्कृतिको जानकारी प्रस्तुत गर्ने उद्देश्यले लेखिएका यिनका नाटक सबैका लागि उपयोगी देखिन्छन् । नेपाली दोस्रो भाषा भएको व्यक्ति प्रवीण पुमाले नेपाली भाषामा आफ्नो जातीय संस्कृति झल्किने खालका नाटकको सिर्जना गर्नुलाई नेपाली साहित्यका क्षेत्रमा उल्लेख्य उपलब्धिका रूपमा लिनुपर्छ ।

*त्रिभुवन विश्वविद्यालय,*
*कीर्तिपुर, काठमाडौँ, नेपाल ।*
E-Mail : drkhalu@yahoo.com



# प्रवीण पुमा

जन्म मिति : २०३५/१२/०७
जन्म स्थान : जन्तेढुङ्गा-५, पाथीभारा, खोटाङ, नेपाल
शिक्षा : एम.ए.(त्रि.वि.)/एमम.फिल. (अंग्रेजी, पो.वि.)
इमेल : sumnimatheatre@gmail.com

## १. सम्प्रति सेवाः

**उप-प्राध्यापक** (२०७५ देखि हालसम्म)
**क्याम्पस प्रमुख** (२०७५ देखि २०७९ सम्म)
**सिनास क्याम्पस**, काठमाण्डौ, नेपाल ।

## २. प्रमूख कृतिहरूः

२.१. **सुम्निमा** (नाटकसङ्ग्रह-२०५३)
२.२. **हेन्खामा-निनाम्मा** (मिथकसङ्ग्रह-२०५४)
२.३. **दोङवाङ-दोङदापा** (संस्कृति-२०६१)
२.४. **सुम्निमा** (चलचित्र-२०६२)
२.५. **सुम्निमा-पारुहाङ** (नाटकसङ्ग्रह-२०६५)
२.६. **हेत्छाकुप्पा** (नाट्यकृति-२०६६)
२.७. **निनाम्मा** (नाटकसङ्ग्रह-२०६७)
२.८. **साया** (नाटकसङ्ग्रह-२०६९)
२.९. **होङछा** (नाटकसङ्ग्रह-२०७१)
२.१०. **बुढाहोङ मुन्दुमः परिचय, पाठ र विश्लेषण** (२०७२, आजउराप्र, नेपाल सरकार)
२.११. **पारुसेवा मुन्दुमः परिचय, पाठ र विश्लेषण** (२०७४, आजउराप्र, नेपाल सरकार)

## ३. उपाधि/सम्मान

३.१. **सर्वोत्कृट अभिनेता-२०५५** (सुथिए)
३.२. **सर्वोत्कृट निर्देशक-२०५६** (सुथिए)
३.३. **उत्कृट नाट्यप्रस्तुति तेस्रो स्थान-२०५९** (सांस्कृतिक संस्थान, नेपाल सरकार)
३.४. **उत्कृठ नवप्रतिभा सम्मान-२०५९** (कि.रा.वि.स., नेपाल)
३.५. **क्षेत्रीय प्रतिभा पुरस्कार-२०७४** (नेपाल सरकार, संस्कृति, नागरिक तथा पर्यटन मन्त्रालय)
३.६. **सर्वोत्कृष्ठ चलचित्र लेखक-२०७४** (आदिवासी चलचित्र महोत्सव, अमेरिका)
३.७. **जुपिटर सम्मान-२०७४** (जुपिटर टोल सुधार समिति, ललितपुर)
३.८. **भिमु सम्मान-२०७५** (भिमुमेमोरियल ट्रष्ट, काठमाण्डौ, नेपाल)
३.९. **चलचित्र सम्मान-२०७६** (कि.रा.च.स., नेपाल)

---

**सरुभक्त** *(कुलपति, नेपाल संगीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठान)*

प्रवीण पुमाको स्मृति नाट्यकृतिले सोझै प्राचीन किराती बिम्बहरूलाई नटिपे पनि किराती जीवनको सेरोफेरो, समकालीन जीवनको यथार्थ र विडम्बना प्रस्तुत गरेको छ । नाटकका प्रमुख पात्र नाट्यविधामा विद्यावारिधि प्राप्त, नाट्कर्मी महासंघ नेपालका सल्लाहकार थुम्राहाङ हुन् । उनको स्मृतिसित प्रेम र गोप्य विवाह हुन्छ । हिमालको पृष्ठभुमिमा आधारित यो प्रेमको कथा तव दुर्घटनामा पर्छ, जब स्मृति बेलायतमा आवासीय भिसामा बसोबास गरिरहेको परिवारमा फर्कन्छे । थुम्राहाङ उच्च बौद्धिक भए पनि भावुकतापूर्वक स्मृतिलाई पर्खिरहन्छ । त्यो अव्यावहारिकताको परिणति अन्तमा स्मृतिको केसाङसित विवाह हुँदा उसको हातमा स्मतिको स्मृतिस्वरुप खैरो ब्लाउज, सिन्दुर र पोतेमात्र स्थिर रहन्छन् । नेपाली समाजमा परिव्याप्त प्रवासमोह, त्यसबाट उत्पन्न विसङ्गति र अन्य मानवीय समस्यामा केन्द्रित भएर रचना भएको यस नाट्यकृतिले सरल सहज भाषाशैली, किराती शब्दावली र बिम्बका साथसाथै यथार्थोन्मुख प्रस्तुतिलाई महत्त्व दिएको छ । *मिति : २०७४/०१/०७*



**सुम्निमा थिएटर एकेडेमी**
ललितपुर-१४, जुपिटरटोल, नेपाल | Tel.: 941245548
E-mail: sumnimatheatre@gmail.com

